# शहीद चिनियाँलाल र महावीर इन्स्टिच्यूट एक परिचय



प्रस्ततकर्ता: उषा सिंह

सम्पादिका : उषा सिंह

प्रकाशक : मवि लोचन सिंह

आवरण र कम्प्युटर सेटिङ्ग : नेपाल कम्प्यूटर सेन्टर
टंगल, ललितपुर । फोन ५५३०३२२

संस्करण : २०६० फागुन ६ गते बुधवार
शिवरात्रि (१००० प्रति)

मुद्रक : सिंग्मा अफसेट प्रेस प्रा.लि.
कमलादी, काठमाण्डौ, नेपाल ।
फोन ४२३१३२८

## श्रद्धा सुमन



शहीद श्री चिनियालाल सिंह र तुल्सीदेवी सिंह

# सम्पर्ण

ती सम्पूर्ण महान् शहीदहरुमा
जसले
देशमा प्रजातन्त्र स्थापनाका खातिर जीवनभर
संघर्ष गरे र अन्त्यमा प्रजातन्त्रकै
लागि हाँसी हासी
जीवनको बलिदान दिए ।

महावीर इन्स्टिच्यूट
विभिन्न आरोह अवरोह पार गरी
६७ औं जन्मजयन्ती मनाउने उपलक्ष्यमा
हार्दिक मंगलमय शुभकामना



यस अवसरमा सम्पूर्ण शिक्षाप्रेमी जनताहरुमा
पुनः व्यवस्थित रुपमा
स्कूल सञ्चालन गर्न हामी प्रण गर्दछौं ।



यस स्कूलको उत्तरोत्तर प्रगतिको लागि
समपूर्ण देशवासीहरुमा सहयोगको निम्ति हार्दिक अपील
गर्दछौं ।



महावीर इन्स्टिच्यूटलाई सहयोग गरौं
महावीर इन्स्टिच्यूटबाट सहयोग लिउँ ।

**महावीर इन्स्टिच्यूट**

२०६०

## प्रकाशकीय

अमर शहीद चिनियाँलाल सिंहको स्मृतिमा उहाँको परिचय दिने उद्देश्यले यो पुस्तक प्रकाशनमा ल्याउने प्रयास गरिएको छ । निजको अथक प्रयासमा नेपालमा स्थापित महावीर इन्ष्टिच्युटको बारेमा समेत यस पुस्तिकाले विवेचनाको लागि सहयोग गर्ने छ। विभिन्न पत्रपत्रिकामा शहीद चिनियाँलालको बारे के कस्तो विवेचना गरिएको छ भन्ने कुरा समग्रमा झल्काउने हेतुले संकलन गरी प्रस्तुत गर्ने जमर्को गरिएको छ ।

निजको नेपाली जगतमा खासगरी शैक्षिक क्षेत्र उत्थानको लागि गहन योगदान भएको तथ्य यस पुस्तकबाट स्पष्ट हुन्छ ।

हरेक साल माघ १० देखि १६ गतेसम्म एक हप्ता विभिन्न शहीदहरूको सम्झनामा शहीद दिवस मनाइ आएका छौं । औपचारिकताको लागि शहीद दिवस मनाउनु निरर्थक हो । निजहरूको योगदानलाई ध्यानमा राखि मननयोग्य उपदेशलाई चिन्तनशील भइ ग्रहण गर्नु र व्यवहारमा उतार्नु नै शहिद दिवसको वास्तविकता हो भन्ने तथ्य हामीले नभुलौं ।

अन्तमा यस पुस्तकमा समावेश भएका सम्पूर्ण लेखहरू विभिन्न पत्रपत्रिका एवं शहीद चिनियाँलाल सिंह र महावीर इन्ष्टिच्यूटसँग निकटत्तम व्यक्तित्वहरूबाट हुबहु प्रस्तुत गरिएको हुँदा कहीं कहीं शब्दहरू त्रुटि हुन गएको छ ।

# महापुरूषहरूको प्रेरणा चाहिन्छ

महावीर इन्ष्टिच्यूटका संस्थापक सदस्य नेपालका शिक्षा प्रचारका अग्रणी शहीद चिनियाँलाल सिंहज्यूले यस क्षेत्रको लागि गर्नु भएको सेवा अतुलनीय छ भन्ने मलाई लाग्दछ। किनकी जुनसुकै देशमा पनि समाजको सर्वाङ्गिण विकासको लागि शिक्षा नै सर्वोपरि हुन्छ भन्ने कुरा शहीद चिनियाँलालज्यूले गहिरिएर बुझ्नु भएको हुनाले नै उहाँले शोषित, पिडित एवं अशिक्षित नेपाली समाजलाई शिक्षाद्वारा उत्थान गराएर देशको सर्वोतोमुखी विकास गराउने उहाँको पवित्र विचारधारा थियो भन्ने कुरामा कुनै शंका छैन। जेल भित्र ४ वर्षसम्मसँगै रहँदा मैले उहाँका उक्त विचारधाराहरू बुझ्ने मौका पाएको थिएँ। वास्तवमा शहीद चिनियाँलाल सिंहज्यू देशको एउटा असाधारण व्यक्तित्व हुनुहुन्थ्यो। उहाँको उच्च विचारधाराले नै शिक्षा क्षेत्र अघि बढी रहेको छ।

उहाँ र उहाँजस्तै महापुरूषहरूको प्रेरणा आजको समाजलाई चाहिएको छ भन्ने मलाई लाग्दछ। आजको युवा पिंढीले हाम्रा ती पूर्वजहरूबाट प्रेरणा लिएर अगाडि बढ्न सकोस् भन्ने मेरो कामना छ।

**रामहरि शर्मा**
नेपाल प्रजापरिषद् र
महावीर इन्ष्टिच्यूट केन्द्रका अध्यक्ष

# सबैलाई महत्व दिन जान्नेले मात्र आम शहीदको सम्मान गर्न जान्दछ ।

कुमारधर शर्मा "ज्ञानी"

सामान्यत: हामी के भन्न सक्छौं भने चिनियाँलाल सिंह राजनीतिक शहीद नभई शैक्षिक क्षेत्रका शहीद हुन् । तर राणा शासकहरु भने उनलाई राजनीतिक अपराधी नै मान्ने गर्थे । फलस्वरुप उनी राजनीतिक अपराधीकै रुपमा बन्दी बनाइए । हामी भने के भन्छौं भने वास्तवमा उनी स्वाभिमानी नागरिक हुन् । उनी सबै नेपालीहरुलाई शिक्षित बनाउन चाहन्थे । उनको यो चाहना राणाहरुलाई पटक्कै सह्य थिएन । राणाभक्तहरु पनि उनको यस चाहनालाई अपराध नै मान्दथे । उनीहरु सर्वसाधारणलाई शिक्षा दिलाउनु हुँदैन भनी राणा शासकहरुलाई उचालिरहन्थे । यसबाट राणाहरुलाई सर्वसाधारण स्वयं पनि पढन चाहँदैनन् भन्ने भ्रम परेको थियो । आफुलाई जे गर्न मन लागेको छ त्यसअनुरुप नै कुरा गर्नेहरुलाई मात्र आफ्ना हितैषी भन्ठान्ने शासकहरुलाई त्यस्तै आसेपासेहरुले चाकरी गरीगरी सिद्धाउँदा रहेछन् । त्यस्तालाई बिरोधीहरुले होइन स्वयं तिनकै आसेपासेहरुको स्वार्थपूर्ण सल्लाह र चाकरीले समूलोच्छ गर्ने गरेको इतिहासमा सर्वत्र देखिन्छ । यथार्थमा राणा शासनलाई समाप्त गर्नेहरु शहीदहरु नभई उनीहरुकै स्वार्थी आसेपासे वा हुकुम शिरोपर गर्नेहरु नै थिए । नढाँटेर भन्ने हो भने स्वयम् उनीहरुकै स्वार्थान्धता र उनीहरुका स्वार्थान्ध अनुयायीहरुले नै गर्दा राणा शासन ढलेको हो । जनताको इच्छानुरुप व्यवस्था गर्न सकेका भए राणाशासन ढल्ने थिएन । वास्तवमा शासकहरु जनताका क्रीत दास हुन्, तर उनीहरु भ्रमवश सोच्छन्- हामी आफ्नो बाहुबलद्वारा प्रजाका मालिक बन्न पुगेका हौं । तिनीहरुलाई त्यसरी गलत बाटोतिर डोऱ्याउनेहरु उनकै स्वार्थान्ध चाकरीबाज अनुयायीहरु र उनीहरु आफुमै रहेको स्वार्थान्ध मनका आफ्नो स्वार्थानुकूल व्याख्याहरु नै हुन् । जति जनालाई तिनीहरुले मारे तिनीहरु सबै यथार्थमा शासकहरुका

हितैषी थिए । शासकहरुको कुभलो गर्नेहरु त उनीहरुको ईच्छानुरुप काम गरी आ-आफ्नो स्वार्थ सिद्ध गर्ने उनीहरुकै चाकरीबाज भारदारहरु हुन् । उनीहरुकै स्वार्थान्ध वंशजहरु हुन् । उनीहरु चाकरी-चाप्लूसी गरीगरी आ-आफ्ना स्वार्थ सिद्ध गर्छन, सुविधाहरुको भोग गर्दछन् । सबै दुनियाँले सुविधा पाए भने हाम्रो सुविधामा कटौती हुन्छ भन्ने भ्रममा उनीहरु आनन्दसाथ डुबुल्की मारिरहेका हुन्छन् । उनीहरु त्यसरी डुबुल्की मार्दामार्दै नै डुबेर निसास्सिन पुग्छन् र निस्कनै नसकी निसास्सिएरै मर्छन् । उनीहरु जस्ता शोषकहरुलाई थामिराख्न स्वयं सर्वशक्तिमान परमेश्वर त समर्थ हुँदैनन् भने ती चाकरीबाजहरुमा त्यो सामर्थ्य कहाँ हुनु !

उनीहरु शक्ति सदा बिजयी हुन्छ भन्ने बुझ्छन्, तर 'शक्ति के हो ?' थाहा छ उनीहरुलाई ? अहँ, शासकहरुले यो कुरा कहिल्यै बुझेनन् । यो अज्ञान नै शासकहरुको अजेय शत्रु हो । सबैको स्वार्थको लागि स्वार्थ त्याग गर्न सक्ने महात्यागी शासकहरु मात्र आत्मरक्षा गर्न उपयुक्त शक्ति सामर्थ्यको सञ्चय गर्न सक्दछन् । सुविधा भोग शासकहरु आफ्नै विनाश र मृत्यु कुरिरहेका हुन्छन् । मृत्यु र बिनाश उनीहरुतिर तीब्र गतिमा तीर झैं हानिएर आइरहेका हुन्छन् । त्यसलाई नै तिनीहरु सुविधा भन्ठानेर भोग्न पुग्छन् र अन्तमा सर्वनाश हुन्छ । तर जुन राष्ट्रका नागरिकहरु सदा व्यक्तिगत स्वार्थको पछि अन्धा भएर लाग्छन् त्यस देशमा भने त्यस्तै स्वार्थान्ध शासकहरु तलदेखि माथिसम्मै आनन्दसाथ राज गरिरहन पाउँछन् । त्यसैले सुविधा भोगी शासकहरु निरन्तर सबै स्वार्थान्ध होउन् भन्ने चाहन्छन् । तर शासकहरु यस सोचमा कहाँनिर नचुकी नसक्ने हुन्छन् भने जहाँ शासक आफ्नो स्वार्थ सिद्धि र चरम सुविधाको भोग गर्ने चाहनामा हुन्छन् त्यहीं उनका अनुयायी र अन्य स्वार्थान्ध प्रजाहरु पनि आफ्नो स्वार्थ सिद्धिको लागि र चरम सुविधाको उपभोग गर्न स्वस्फूर्त रुपमा शासकहरुकै सिको गरिरहेका हुन्छन् । त्यस्ता त्याग भावना नभएका शासक, प्रशासक, उद्योगी, ब्यापारी, शिक्षक, चिकित्सक, प्रवक्ता, अधिवक्ता, नेता, अभिनेता, विधिवेत्ता, यन्त्रवेत्ता, अर्थवित्, नीतिवित्, विज्ञानवित् दर्शन-

वित्हरु भएका राष्ट्रहरु केवल एकले अर्कालाई छकाएर, शोषण गरेर कमाउने कूटनीतिमा लागेर आफ्नो देश र आफु एवं भावी पुस्तालाई समेत भसक्कै पारेर सिध्याउने पटमूर्ख कूटनीतिज्ञहरुको षड्यन्त्रको जालोमा फसी आफ्नो अस्तित्व निमिट्यान्न पार्न विवश हुन्छन् । वर्तमान विश्व राजनीति त्यतैतिर तीब्र गतिले अग्रसर हुँदै गइरहेको छ र त्यसको बीउ हजारौं-हजार वर्ष अघि स्वार्थान्धहरुले नै रोपेका थिए । अस्तिका ती स्वार्थान्धहरुकै नीतिलाई हिजोका शासकहरुले पछ्याए भने आजका र भावी कर्णधारहरु समेत षड्यन्त्रको जालो बुनी आफ्नै मात्र रजाइँ होस् भन्ने चाहनाले नराम्रोसित ग्रस्त छन् । यस्तै षड्यन्त्रको शिकार बनेकाथिए - शहीद चिनियाँलाल सिंह ।

उनको अपराध के थियो ?

— अरुलाई पढाएर शिक्षिक बनाउन खोज्नु ।
— अपराधीहरु, राष्ट्रमाथि अपराध गरेर सुविधा भोग गरिरहेकाहरु राष्ट्र र राष्ट्रवासीहरुलाई नै ठगेर शोषण गरेर मालिक बनेको भ्रम पालिरहका दुष्ट शासकहरुका स्वार्थान्ध नीतिहरुको भण्डाफोर गर्ने क्षमता सर्वसाधारण नागरिकहरुमा भर्न खोज्नु ।
— सत्यलाई उदङ्गयाएर स्वार्थान्ध शासक वर्गलाई नङ्ग्याउन खोज्नु ।
— थोरै समयमा बहुसंख्यक जनतालाई धेरै शिक्षा दिन खोज्नु ।

यस्तै यस्तै अपराध गरेका थिए चिनियाँलालले । साँच्चै भन्ने हो भने स्वार्थ रहित परोपकारको भावना बोकेर हिड्नु जस्तो भयङ्कर अपराध गरेका थिए चिनियाँलालले । नाम चिनियाँलाल भएर पनि नेपालीलाल बनेरै काममा, निष्काम कर्ममा लागिरहनु उनको अक्षम्य अपराध थियो । शासकहरुको सुनको दरवारलाई परालको दरवार जति पनि नठानिदिनु जस्तो जघन्य अपराध गरेका थिए चिनियाँलालले । शासकहरुको अन्यायको प्रतिरोध गरी सर्वसाधारणलाई शिक्षा दिएर न्यायको प्रतिष्ठा स्थापित गर्न खोज्नु जस्तो निर्भीकतापूर्ण कार्य गरेका थिए उनले । अनि उनी कसरी क्षम्य हुन्थे त शासकहरुको आँखामा !

आजको प्रजातान्त्रिक युगमा त शासकहरु शिक्षा, साहित्य जस्ता क्षेत्रलाई अनुत्पादक मान्दछन् भने त्यसबेलाका शासकहरुबाट यस्ता क्षेत्रलाई प्रोत्साहन प्राप्त हुने कसरी ? त्यसबेलाको त्यो हुकुमी शासन त प्रकृत्तितः निरङ्कुश थियो । त्यस्तो समयमा बि.सं.१९७९-९० देखि नै शैक्षिक अभियान शुरु गरी १९९३ मा घोषित रुपमै आफ्नै घरमा '**महावीर इन्ष्टिच्यूट**' खोल्ने व्यक्तिलाई उनीहरु किन प्रोत्साहन दिन्थे ! बाध्यतावश 'त्रिचन्द्र कलेज' खोल्नुपर्दा उद्‌घाटन गरी फर्केका राणा शासक श्री ३ महाराज चन्द्र शमशेरले आफ्नै वंश माथि आगो झोसेर आएको महसूस गरी त्यस्तो अभिव्यक्ति दिइहालेका थिए रे ! कस्तो मानसिक पीडाको अनुभव भयो होला त्यतिबेला उनलाई सर्वसाधारण जनतालाई समेत उच्च शिक्षा दिनुपर्ने आशङ्काले ! बेलायतमाथि धाक जमाउन बाध्यतावश उनले यो काम गर्नु परेको थियो । श्री ३ महाराज जुद्धशमशेरलाई पनि त्यो बाध्यता त थियो, तर यसरी स्कूलहरु खोली आफ्नै वंशमा आगो झोस्न त उनी पनि चाहँदैनथे । जनता शिक्षित भएपछि चेतनशील हुन्छन् र उनीहरुको शासन सत्तामा धक्का लाग्ला भन्ने पीर त उनलाई पनि थियो । देश बिकास त उनी देखावटी रुपमा मात्र गर्न चाहन्थे, उनी यस आडम्बरलाई यथार्थ बिकासको रुप दिन कुनै हालतमा चाहँदैनथे । अनि नेपालीहरुलाई छिटो छिटो ६-६ महिनामै कक्षा चढाउने नयाँ योजनालाई ज.मृगेन्द्र शम्शेरले स्वीकृति दिनु कसरी सम्भव हुन्थ्यो ! उनले चाहे पनि सम्भव थिएन, त्यसमाथि रोलवाला जर्नेलले यस्तो चाहनु आफ्नै खट्टामा बञ्चरो हान्नु भएन र !

त्यसबेला जति युवकहरुले शैक्षिक समुन्नतिको लागि विद्यालय, पुस्तकालय आदि खोले ती सबै उनीहरुको लागि अपराधी मात्र थिए, देशभक्त होइन । त्यसैले उनी मात्र होइन अरु पनि धेरैजना पक्राउमा परे । पुस्तकालय काण्डमा, प्रजा परिषत्काण्डमा, विद्यालयकाण्डमा र अन्य विविध काण्डमा ! त्यसमाथि चिनियाँलाल जस्ता स्वाभिमानीहरुलाई त शासकहरुले सहनु कसरी ! **शैक्षिक क्रान्तिका अग्रदूत चिनियाँ दाइमा** युगकवि सिद्धिचरण श्रेष्ठले लेखेका

छन् -"मान्छेको निम्ति स्कूल जस्तो संस्था खोल्न पनि सरकारले दवाव दिएर हुन्छ ? खोल्छु-खोल्छु, मलाई कसले के गर्न सक्छ र !" यो भनाइ चिनियाँलाल-को रहेछ । यस्ता अभिव्यक्ति दिने मात्र होइन, आफु जेल पर्ने सम्भावनालाई दृष्टिगत गरी घरमै जेल जीवनको अभ्यास समेत गर्ने चिनियाँलाल जति स्वाभिमानी थिए त्यसभन्दा बढी निर्भीक पनि थिए भन्ने स्पष्ट हुन्छ । सुकुलमा सुत्ने र दुई पैसाको भटमास खाई छाक टार्ने जस्ता अभ्यास उनले पक्राउ पर्नु अघि नै घरैमा गर्न थालेका थिए रे ! युगकविको भनाई हो यो ।

गुप्तचरहरुले आफूलाई पछ्याइरहेको उनलाई राम्ररी नै थाहा रहेछ । तैपनि उनी आफ्नो अभियानबाट एक पाइला पनि पछि हट्न् । यस्ता हठ्ठी व्यक्ति के निरङ्कुश स्वभावका शासकहरुको दृष्टिमा कहिल्यै क्षम्य हुन सक्दछन्, प्रोत्साहनयोग्य मानिन सक्छन्, श्लाध्य ठहर्न सक्छन् ? त्यसैले उनी र उनका दाजु फत्तेबहादुर पनि जेलमा ठोसिए । जेलमा ठोसिएका मात्र पनि होइनन् दुवैजनाको सर्वस्वहरण पनि भयो । यसरी 'आफ्नो घरको बुइँगल बाहेक अरु सबै कोठाहरु विद्यालय कक्षाको रुपमा परिणत गरी शिक्षा प्रचार गर्ने चिनियाँलाल माथि निरङ्कुश सरकारबाट नृशंस र जघन्य कारवाई भयो । देशै उर्लेर त्यसको बिरोध गर्न सक्ने आत्मबल र चेतना नेपालीहरुमा भरिइसकेको भए अवश्य पनि यो कारवाई सरकारले फिर्ता लिनैंपर्थ्यो । तर राणाहरुको विरोध गरी तिनीहरुलाई बाध्यात्मक स्थितिमा पुऱ्याई त्यस अवस्थामा राणाहरुलाई पुऱ्याउने आँट न राजामा थियो, न प्रजामा थियो । त्यसैले राणाहरुको दु:साहसमा निरन्तर बृद्धि हुँदै गइरहेको थियो । प्रजातन्त्रिक व्यवस्थामा त देशलाई भ्रष्टाचारको भासमा निरन्तर फसाँदै गइरहेका नेता, मन्त्री, प्रधानमन्त्री र विधायकहरुको बिरोधमा एकमत हुन नसक्ने नेपालीहरुमा त्यसबेला त्यस्तो आत्मबलको उदय होओस् कसरी ! आफ्नो हित र अहितको सही पहिचान गर्न कहिल्यै नसक्ने नेपालीहरुमाथि शोषक, लुटाहा र भ्रष्टाचारीहरुको रजाइँ सधैं रहिरहनु आश्चर्यजनक कुरो त हुँदै होइन । आफैंमाथि बज्रापत हुन्जेलसम्म पनि नचेत्ने नेपालीहरुको स्वभाव त्यसबेला

पनि त्यस्तै थियो । त्यसकारण शहीद चिनियाँलाल जस्ता राष्ट्रभक्तहरु मरिरहे, तर कैयौंलाई शहीद भनी चिन्नसम्म सकेनन् नेपालीहरुले, बरु झन् शहीदलाई शहीद होइन भन्ने दु:साहसी भने देखिए ।

क्रान्तिकै क्रममा नृशंसतापूर्वक मारिएका राष्ट्रका सपूतहरुलाई समेत शहीद होइन भन्ने आँट गर्न सक्ने अहिलेका नेपालीहरुकै पूर्वज वा अग्रज व्यक्ति थिए उसबेलाका नेपाली नागरिकहरु । स्वभाव त त्यस्तै थियो सबैको - अरुलाई किन महत्व दिने ? अरुलाई किन उठाउने ? अरुलाई किन इज्जत दिने ? अरुलाई किन प्रतिष्ठा दिने ? अरुको सम्मान किन गर्ने ? बरु आफैंलाई महत्व दिने, आफैंलाई उठाउने, आफैंलाई इज्जत दिने-प्रतिष्ठा दिने, आफ्नै सम्मान गर्ने-गराउने । कसैलाई उठाउन नचाहने, आफू भन्दा सानालाई आफुभन्दा माथि उठाउन नचाहने तर शक्तिमान्‌को चाकरी भने कुक्कुरै बनेर वा अझै निम्नस्तरमा झरेर पनि गर्न सदा तैयार रहने नेपालीहरु बरु बिदेशीहरुलाई साहब भनी सम्मान गर्छन् आफ्नै नेपाली दाजु-भाइलाई सम्मान गर्दैनन् । हो, शक्तिमानको भने स्वार्थ साधनको भुमरीमा परी चाकरी गर्न पुग्छन् । यो नेपालीहरुको यथार्थ प्रकृति हो, स्वभाव हो । नेपालीहरुले कहिले महसूस गर्ने - यथार्थमा दासप्रवृत्ति हो यो स्वभाव भनेर ? अनि थाहा पाउने कहिले - यसै स्वभावले गर्दा नेपालीहरुले दु:ख पाइरहनु परेको हो भनेर ? अनि झन् यो ज्ञान पाउने कहिले - यस्तो स्वभाव भएकाहरु हजारजना नोकर पाल्ने नै भए पनि मालिक त हुँदै होइनन्, बरु झन् उल्टो दासका नाइके महादास मात्र हुन् भनेर ? शहीदलाई शहीद नमान्ने र शहीदहरुका स्मारक बस्तु घरहरु समेत जग्गाहरु समेत हडप्ने चाहना उक्त स्वभाव वा प्रकृत्तिकै उपज मात्र हुन् भन्ने यथार्थ स्पष्ट छ ।

दुनियाँका जग्गा जमीन जबर्जस्ती अधिग्रहण गरी आ-आफ्नो दरवार बनाउने राणा शासकहरुबाट ती जग्गा खास जग्गाधनीलाई फर्काउन नसक्ने सरकारले शहीदहरुको सर्वस्वहरण गरेर लिएको जग्गा त शहीदका सन्ततिहरुलाई फर्काउन सक्नैपर्थ्यो । अनि शहीदहरुका स्मारक घर-जग्गामा ती

शहीदहरुको स्मारक खडा गर्ने हिसाबले ती नै घर जग्गामा वा अन्य जग्गामा भए पनि सबैको हित हुने कार्य गर्ने गराउने ब्यवस्था सरकार आफैंले गर्नुपर्थ्यो ।

शहीद चिनियाँलालको सबभन्दा प्रभावकारी तथा अविस्मरणीय स्मारक भनेको **महावीर इन्ष्टिच्यूट** र सो विद्यालय चलेको घर नै हो । यसमा पनि विशेष महत्वपूर्ण चाहिँ विद्यालय नै हो । यसलाई **शहीद चिनियाँलाल स्मारक महावीर इन्ष्टिच्यूट** नाम दिई पुनःस्थापित गर्नुको विकल्प नै छैन भन्ने कुरो सरकार र स्थानीय प्रशासनले समेत महसूस गर्नैपर्ने कुरो हो । यसको सम्पूर्ण व्यवस्था पनि यिनीहरुले नै गर्नुपर्छ । यसको लागि परिचालित जनशक्तिलाई तत्काल टेवा दिनु यिनीहरुको अनिवार्य कर्तव्य हो । परिचालित जनशक्तिलाई सरकार र स्थानीय स्वायत्त शासनले संयुक्त रुपमै दरो टेवा दिन सक्नुपर्छ, नत्र यस विद्यालयलाई बन्द गर्न कारवाई गर्ने राणा शासनले जति अपयश पाएको थियो त्यति नै बदनामी यिनले पनि पाउनेछन् । छातीमा हात राखेर सोचौं त - के यसमा सत्यता छैन ? **महावीर इन्ष्टिच्यूट**लाई पुनर्जीवन दिनु हाम्रो कर्तव्य होइन ? के यो मृत प्राणीलाई पुनर्जीवन दिनु झैं असम्भव कुरो हो र ?

यथार्थ कुरो गर्ने हो भने शहीदको कृतित्वलाई कायम रहन दिनु भनेको प्रत्यक्ष रुपमा नभए पनि घुमाउरो पारामा शहीदलाई उनको कृतित्वमा पुनर्जीवन दिनु मात्र नभएर उनलाई अमरत्व प्रदान गर्नु पर्ने हो । हामी उनको भौतिक वा पार्थिव शरीरलाई अमरता दिन सक्तैनौं, तर उनको कृतित्वमा उनलाई जीवित रुप मै भेट्टाउन सक्छौं । यो भावनात्मक कुरा मात्र होइन शहीदप्रति, व्यक्तिप्रति र राष्ट्रप्रति कर्तव्य बोधको कुरो पनि हो । यसो गर्नाले हाम्रै कल्याण हुन्छ, राष्ट्रकै कल्याण हुन्छ, अझ गहिरिएर सोच्ने हो भने मानव-समाजकै कल्याण हुन्छ । शहीदको शहादतको कदर गर्नाले हामी कृतघ्न हुँदैनौ तर अमर शहीद मात्र भनी उनका कृतित्वको कदर गर्दैनौं- संरक्षण गर्दैनौं भने फर्केर हामी पुनः कृतघ्न नै ठहर्छौं । राष्ट्र नै यसबाट अभिशापबाट मुक्त हुन एउटै मात्र बाटो हामीसित छ, त्यो हो शहीदका कृतित्वको संरक्षण गर्नु । यस

कर्तव्यबाट राष्ट्रले मुख मोड्नु भनेको राष्ट्रवासीले समेत यस अभिशापलाई मूर्खतावश अङ्गिकार गर्नु हो । त्यसैले राष्ट्रवासीहरुले एकमत भएर सरकार र समाजलाई समेत शहीदका कृतित्वलाई सदा संरक्षित र ब्यवस्थित राख्न दवाव दिन सक्नुपर्छ र आफ्नो तरफबाट पनि योगदान दिन सदा तत्पर रहन सक्नुपर्छ । हामीले **महावीर इन्टिच्यूट**को सञ्चालन त्यसको पूर्व उद्देश्य अनुसार नै आदर्श शिक्षा प्रतिष्ठानको रुपमा गरिरहन सक्नुपर्छ, राष्ट्र र राष्ट्रवासीले अवश्य पनि शहीदबाट कल्याकारी आशिर्वाद पाउनेछन् । त्यस घरलाई उनको स्मारक सङ्ग्रहालयमा परिषत गर्नु जस्तो त्यागपूर्ण कार्य गर्न उनका निकट र निकटतम परिवारलाई मनाउन सक्यौं भने त सुनमा सुगन्ध थपिनेछ । त्यसको लागि शहीद-परिवारलाइं सरकार र नागरिक समाजले सक्दो सहयोग गर्न सक्नुपर्छ, तिनीहरुलाई हामीले बिकल्प पनि दिन सक्नुपर्छ, बसिरहेको घरबाट जबर्जस्ती उठाएर खोसेरै लिनु भने न्यायसङ्गत कुरो होइन । माग्छन् भने बिकल्प त दिनैपर्छ । यो दिनु सरकारको कर्तव्य हो । कसैको कुनै पनि कुरो जबर्जस्ती, उनीहरुको इच्छा विपरीत खोसेरै लिने अधिकार सरकारलाई पनि छैन, राष्ट्राध्यक्षलाई पनि छैन, तर राम्रो बिकल्प दिएर राम्रो काम गर्ने अधिकार भने सबैलाई छ, किनभने त्यतिखेर त्यो अधिकार नभएर हानिरहित कर्तव्य पालनमा परिणत भइसकेको हुन्छ ।

आफ्नै परिवारलाई घरबाट बेदखली गरी घरवारविहीन र बेसहारा अवस्थामा पुऱ्याउनेलाई शहीदको आत्माले आशीर्वाद दिन्छ भन्ने सोच्नु चाहिं विवेकहीन सोचाई ठहर्छ । अन्यायपूर्ण अप्रिय कार्य गर्दा पनि आशीर्वाद वा शुभचिन्तनको फोहरा फुटेर हामीतिरै आउनेछ र हामीलाई आफ्नो पालन जलले अभिषेक गराउनेछ भन्ने सोच कोही राख्दछ भने त्यसले मानव मूल्य र आदर्श मान्यताको सम्मान गर्न नजानेकै मान्नुपर्छ । मानव मानवकै रुपमा बाँच्न समर्थ होओस्- शहीदले शहादतलाई अङ्गिकार गर्नुको मूलोद्देश्य यही हो । यस मूलोद्देश्य माथि नै प्रहार हुन जान्छ भने त्यसलाई कल्याणकारी कार्य कसरी मान्ने ?

शहीद-परिवार स्वयं समर्थ छ भने परिवारले पनि यो काम गर्नसक्छ। तर त्यस घडीमा पनि राष्ट्र र राष्ट्रवासीहरुले आ-आफ्नो तरफबाट सक्दो योगदान गर्नैपर्छ, सहयोग गर्नैपर्छ र साथै शहीद-परिवारको उच्चतम सम्मान गर्न सर्वदा न्यायपूर्ण ढङ्गले अग्रसर रहनु पर्छ। शहीद-परिवारको प्रत्येक राम्रो कार्यको उच्चतम मूल्याङ्कन गर्न हामी कहिल्यै पछि पर्नु हुँदैन।

यस दृष्टिकोणलाई नविर्सिकन **महावीर इन्स्टिच्यूट** र **सङ्ग्रहालय**को परिकल्पनालाई दुर्नियोजित रुपमा होइन, सुनियोजित रुपमा अघि बढाएर साकार रुप दिन सक्यौं भने हामीलाई अवश्य पनि शहीदको आत्माबाट कल्याण स्त्रोत्र आशीर्वाद निरन्तर प्राप्त भइरहनेछ, किनभने यसबाट हाम्रो मानस संस्कार सुगन्धित हुनेछ र वातावरणमा ब्याप्त कुसंस्कारको दुर्गन्धलाई सर्वथा सधैंको लागि हटाउन यस संस्कारले नै हामीलाई प्रभावकारी सघाउ पुऱ्याउने छ। कुनै पनि भौतिक उपलब्धि भन्दा ठूलो उपलब्धि यस उपलब्धिभन्दा ठूलो साबित हुन सक्तैन। यस्तो सुकार्य सुसम्पन्न गर्न-गराउन सरकारी र गैरसरकारी सबै पक्ष लाग्न सके जसतै गाह्रो काम भए पनि भई छाड्नेछ। हामीले बिर्सन हुँदैन- शहीदका स्मारक र कृतिको प्रतिष्ठापना भनेको हाम्रै सुखमय जीवनको प्रतिष्ठापना हो, किनभने शहीदले यसैको लागि शहादत प्राप्त गरेका हुन्। हामीले हाम्रो आफ्नो प्रतिष्ठा, अड्डी र जिद्दी वा आ-आफ्नो व्यक्तिगत आत्मसम्मानलाई यस पुनित कार्यमा तगारोका रुपमा उभ्याएर काम अघि बढाउनै नमिल्ने स्थितिको सिर्जना गर्नु ठीक होइन, उचित होइन। सरकारले त सोच्नैपऱ्यो - काम कसरी सुसम्पन्न गर्ने ? साथै जनप्रशासनले पनि सोच्नै पऱ्यो-जनताको प्रतिष्ठा र महत्ता बढाउने शुभ अवसर हामीले हाम्रा हातबाट कहिल्यै चिप्लन दिनु हुँदैन। शहीद-परिवार पनि यसमा स्पष्ट दृष्टिकोण अघि सार्न हिचकिचाउनु हुँदैन, तर **महावीर इन्स्टिच्यूट** र सङ्ग्रहालयको स्थापना सम्बन्धी सोचलाई साकार बनाउने दिशाबाट आफ्नो दुनो मात्र सोभ्याउनुतिर त्यो दृष्टिकोण नपुगोस्- यस कुरामा सबै पक्ष उत्तिकै चनाखो हुनु आवश्यक छ।

शहीदहरुको सम्मान गर्नाले अवश्य पनि राष्ट्र र राष्ट्रवासीको कल्याण नै हुन्छ । युगकवि सिद्धिचरण पूर्ण आत्मविश्वास साथ भन्नुहुन्छ - ***जहाँ शहीदप्रति सम्मान हुन्छ र उनीहरुको योगदानप्रति हरेक नागरिक सचेत हुन्छ त्यहाँ प्रगति र उन्नति हुन्छ-हुन्छ - शैक्षिक क्रान्तिका अग्रदूत चिनियाँ दाइ ।*** प्रत्येक बुद्धिमान र देशभक्तको बिचार हुन्छ यस्तै । देश र देशवासीको भलाईबारे नसोची आफ्नै व्यक्तिगत, पारिवारिक वा नातामुखी स्वार्थमा मात्र केन्द्रित भएर सोच्ने परम् स्वार्थीहरु मात्र शहीदहरुका स्मारक र कृतित्वहरुको संरक्षण प्रति उदासीन रहनुलाई जायज ठान्छन् । जो अरु प्रति कृतज्ञ भएर काम गर्ने शैलीबाट बिमुख हुन्छ त्यो कदापि जनमुखी र देशभक्त हुन सक्तैन, कृतघ्न देशभक्तिको दावी गर्छ अर्थात आफु देशभक्त भएको दावी गर्छ भने त्यो आडम्बर मात्र हो भन्ने हामी सबैले बुझ्नुपर्छ । स्वार्थीले मात्र अरुको इतिहास दबाउँछ, त्यो सर्वथा कृतघ्न हो र कृतघ्नहरु देशप्रति बफादार हुन्छन् भन्ने कुरो खरायोको सिङ जस्तै नै असम्भव हो । मरु भूमिमा पानी भेट्टिएला, तर कृतघ्नमा देशप्रति बफादारी भेट्टिनु असम्भव छ । शहीद सम्बन्धी कुरामा सक्षम, उपाययुक्त र साधन सम्पन्न निकाय पनि उदासीन र धिङ्न्याहा हुन्छ भने त्यो अवश्य पनि पक्षपाती र परमस्वार्थी हुन्छ । त्यस्तो निकाय र व्यक्तिबाट देश हितका काम हुन्छन् वा भइरहन्छन् भन्ठान्नु त मृग मरीचिका मात्र हो । उ त देश हितका काम गर्दा देशको होइन आफ्नै स्वार्थ सिद्ध गर्न निरन्तर चिन्तनशील भएर काम गरिरहेको हुन्छ । हामी आफ्नो संस्कार नबिगारौं र कसैप्रति पनि कृतघ्नतापूर्ण व्यवहार नगरौं, आफ्नै र आफन्तको कामलाई मात्र इतिहासमा दर्ने र महत्व दिने जस्तो कुकृत्य पनि नगरौं, सबैलाई महत्व देऔं, शहीदलाई मान्ने भइहाल्छौं ।



# एक शहीद पत्नीको डायरी



(शहीद दिवस धुमधामसँग भरखरै मनाइएको परिप्रेक्ष्यमा शहीदका परिवार कहाँ कसरी बाँचेका छन् । तिनीहरुले विगतका दिनहरु कसरी गुजार्दै आए भन्ने कुराको मार्मिक चित्रण बि.सं. १९९३ सालमा "महावीर इन्स्टिच्यूट" खोले बापत कारावास भै स्वर्गिय हुनुभएका चिनियाँलाल श्रेष्ठकी धर्मपत्नी स्व.तुल्सीदेवी सिंहको डायरी पल्टाउँदा भेटिन्छ । शहीद दिवसको अवसरमा सोध्दै-खोज्दै जाँदा उक्त डायरी भेट्टिएको र त्यहाँ उल्लेखित कुरा पाठक समक्ष पुऱ्याउनु सान्दर्भिक भएकोले उक्त डायरीमा लेखिएको केही अंश यहाँ प्रस्तुत गरिएको छ ।)

चिनियाँलाल श्रेष्ठ एकै घरमा हुनुहन्थ्यो । त्यतिबेला उहाँका साथीहरुले कमाउन सल्लाह दिनुहुँदा, उहाँ भन्ने गर्नुहुन्थ्यो- मेरो दुई दुई जना दाजुहरु कमाउन जानुभएको छ । मैले घरको हेरचाह गरिरहेको छु । यो पनि त एक किसिमको कमाइ नै त हो नि । मेरा दाजुहरुप्रति पूरा बिश्वास र भरोसा छ, उहाँ मलाई बराबर सम्झाउनु हुन्थ्यो - "मेरा धेरै असल साथीहरु छन् । साथीहरु पनि ठूलो धन हो । तिमीले कुनै पीर सुर्ता मान्नु पर्दैन ।"

मेरा पति र जेठाजू (फत्तेबहादुर सिंह) दुवै जेल परे । त्यतिबेला यी लालाबाला (मदनलोचन सिंह, योगेन्द्रलाल सिंह तथा उषा सिंह) लाई पाल्न कति दु:ख कष्ट भोग्न परेको थियो र कसरी पाले म आफैंलाई थाहा छैन ।

राणा शासकबाट खटिएर सर्वस्व गर्न घरमा आइपुगे । सबै सर्वस्व गर्न लाग्दा हामी जेठानी देउरानी दुवैले "हाम्रा ठूलो जेठाजु (शम्सेरबहादुर सिंह) पनि हुनुहुन्छ, उहाँ जागीर खाएर तराईमा बस्नुभएको छ, उहाँको अंश छुट्याएर मात्र "सर्वस्व गरियोस्" भनी कत्ति रोइकराई गर्दा बल्ल ठूलो जेठाजुको अंश छोडियो ।

सर्वस्व हुनुअघि घरमा बस्नै नहुने गरी चुहिएको थियो, लोग्नेमान्छे दुवै जेलमा हुनुहन्थ्यो । उहाँका साथीहरु पनि सबै जेल मै थिए । केही नलागी

शान्त शम्सेर कहाँ पुगी घरको सबै हाल बताउँदा हामी जेठानी देउरानीलाई घरको छाना मर्मत गर्न भनी रु.५००।- (पाँच सय रुपैयाँ) जेठानीको हातमा दिएछन् । विधिको बिडम्बना भनूँ या नियतिको खोटोपन ! सो रकमले घर छाउने कुरै छाडौ, जेठानीको गहना पो बनेछ । त्यतिबेला घरमा हत्तोहरण केही थिएन । कसै गरी जोरजाम गरी एक माना चिउराले छाक टार्न आठजनालाई भाग छुट्याउन पर्थ्यो । कसै गरी कहिले भोकै र कहिले निस्तो नून चिउरामा महिनौ महिना वर्षै वर्ष चिसो चुल्हो मै दिन बित्दै गए ।

त्यस्ता दिनमा जेठानीले राणा शासकहरु कहाँ आफ्नो लोग्नेसँग भेट्न भनी निवेदन दिनु भएछ । तर त्यसमा मेरा नाम समावेश नगरिएकोले मेरा पतिसँग मेरो भेट हुन दिइएन । त्यति बेला मलाई मुटु फुटे झैं चोट पऱ्यो । मेरो पतिले अन्तिम अवस्था भन्दा पहिले कसैको अनुहारसम्म देख्न पाएनन् ।

त्यसै क्रममा जेठाजु जेलबाट छुट्नु भयो । अब त दुःखका दिन गए, बालबच्चाको मुखमा माड लाग्छ भन्ने आशा पलायो । हामी खुशीले गद्गद् भयौ । तर त्यो सपना मै बिलायो म र मेरा बालबच्चा छुट्याएर स्वयम्भू पछाडि चोक छेउमा अलग बस्नु जानुभयो । हामीले बाससम्म पाउन कठिन परेपछि रोई कराई गर्दा बल्ल बल्ल एउटा कोठा निगाह भयो । नाबालकहरुसँगै बसौ भन्दा "कहाँ लैजानु" भनी छुट्टिएर जानु भयो । अझ उल्टै समाजमा हल्ला फैलाइयो -"बुहारीले जेठाजुलाई घोक्र्याएर घरबाट निकाले ।"

यसरी छुट्टिएर जाँदा घरमा अन्नको दानासम्म पनि थिएन । तीन-तीन जना लालाबालालाई कसरी पाल्ने ? सबै भोकभोकै बस्न शिवाय अरु चारा नै के थियो र ?

त्यतिबेला जेठाजुले सरकारसँग गुहारे.र रु.५,०००।- (पाँच हजार रुपैयाँ) ल्याइसकेको रहेछन् । हामीलाई के थाहा ? त्यस्तैमा जेठा फत्तेबहादुर सिंहले सर्वश्वहरण भए बाहेकको बाँकी घर अंश बेच्ने प्रस्ताव ल्याए । उहाँको

भनाई थियो- बाँकी घर अहिले बेचेन भने जेठो दाइ शम्सेरबहादुर सिंहले दावी गर्नुहुन्छ। हामीले पाउँदैनौं।

सो प्रस्तावसँग म सहमत भइन। कुनै हालतमा पनि बेच्न दिन्न भनी अड्डी लिए। त्यसैले बेच्न सकेन र घर थामियो।

प्रजातन्त्र आयो। सर्वश्व धेरै प्रयासपछि फर्कियो। अनि सानी छोरी उषालाई पढाउन श्री ५ महाराजाधिराज त्रिभुवन कहाँ विन्तिपत्र चढाइयो। शहीदको छोरीलाई राम्रो ठाउँमा पढाउन सरकारी सहायता प्राप्त भयो। अनि जेठाजुले सो आदेश सम्बन्धी चिठ्ठीपत्र हात पारेछन्। अनि के थियो र भाइको छोरी भनेर आफ्नै छोरी सुशिला (शिलु)लाई पढन पठाइयो।

ब्रह्म शम्सेर बिभागीय प्रमुख तथा तारादेव भट्टराई घरेलु बिभागको डाइरेक्टर हुनुभएको बेला त्यही २००४।५ साल ताका हल्चोकको जग्गा उद्योगको घर बनाउन भनी सहायता स्वरुप उपलब्ध गराइएको थियो। सो जग्गा गणेशमान सिंह (वर्तमान वरिष्ठ नेता) उद्योग वाणिज्य मन्त्री छँदा उहाँले आफ्नो नाममा दर्ता गराउनु भयो। घर मर्मत गर्न, मेरा पतिले लिएको ऋण तिर्न भनी सरकारबाट प्राप्त सबै रकम भोग गर्ने पनि उहाँ एक्लै हुनुभयो।

टंकप्रसाद आचार्य प्रधानमन्त्री भएको (०१२।१३ साल ताका) बेलामा र डा.के.आई. सिंहको प्रधानमन्त्रीत्वमा राजनैतिक पीडितको लागि सहायता बितरण गरिएको थियो। त्यो पनि जेठाजु कै एकलौटी हुन पुग्यो। त्यसरी नै टंकप्रसाद आचार्य राजनैतिक पीडित सहयोग समितिको अध्यक्ष हुँदा ०१७।१८ सालमा पनि पुस्तकालय, स्कूल खोल्न र शहीदका परिवारको हेरचाह गर्न भनी थुप्रै सहायता आएको कुरा पनि मैले पछि थाहा पाएँ।

सो रकम हात पारेपछि न शहीदले स्थापना गर्नुभएको **महावीर इन्स्टिच्यूट**को पुनर्स्थापना भयो न त लाइब्रेरी नै फेरि सञ्चालन गरियो। मेरा बालबच्चा भोको, नाङ्गो र बेसहारा थिए। चिनियाँ दाइको नामबाट फत्तेबहादुर दाइले हरप्रकारको फाइदा उठाउँदैछ भनी उहाँहरुकै साथीहरुले

मलाई बारम्बार भन्ने गरे तापनि मैले कुनै कुरा कतै भनिनँ । जे जति गरे पनि जेठाजू नै त हो नि भनी आँशु पिएर बाँचे ।

देशमा प्रजातन्त्र आउनुभन्दा अघिको कुरो हो- मेरो जेठा छोरा मदनलोचन सिंहको एउटा पत्र लिएर बिष्णुसुन्दर प्रधान भूमिगत बस्न भनी म कहाँ आइपुगे । श्री प्रधानलाई वारेण्ट भएकोले घरमा लुकाइराखेकी थिएँ ।

***एकदिन प्रधानलाई देखेपछि जेठाजू जङ्गिएर नैतिक पतनको आरोपसम्म लगाउनु भयो । उहाँले यहाँसम्म अपशब्द प्रयोग गर्नुभयो कि घरबाट निकालेर भाग्ने तुल्याईदिने धम्कीसम्म दिनुभयो । मदनको चिट्ठी देखाउँदा पनि उहाँको मन अलिकति पनि पग्लिएन र आखिर प्रधानले "साँझपख म जान्छु, अहिले दिउँसो पुलिस वा गुप्तचरले देख्यो भने पक्रनेछ भन्दा पनि घर पाएनन् आखिर दिउँसो २ बजे घरबाट निकालेरै पठाए । छोराको इच्छा अनुसार एक जना राजनैतिक कार्यकर्ता समेतलाई पनि आश्रम दिने काम गर्न सकिएन ।***

ठूलो जेठाजु शम्सेर बहादुर सिंहले घर ब्यवहारमा बाहिर रहेर पनि कहिलेकाही सघाउनुहुन्थ्यो भने म बिधुवा अवला र नाबालकहरुको दशा देखि पग्लिएर काठमाण्डौको आफ्नो अंश बुहारीको नाममा लेखिदिने कुरा गर्नुभयो । यसको सुइको पाउने बित्तिकै जेठाजु फत्तेबहादुर सिंहले उक्त घर सम्पत्ति आफ्नो नाउँमा गरिसक्नु भएछ । त्यसपछि मैले यो कुरा सबै घर छिमकेलाई भन्दा चारैतिर फैलियो र यो कुरा मिलाउन रामहरि शर्मा, टंकप्रसाद आचार्य, खड्कमान सिंह, सिद्धिचरण श्रेष्ठ हाम्रो घरमा आउनुभयो ।

*(प्रस्फुटन, वर्ष २, अंक ४, २०५२ बैशाख)*



# महायज्ञको प्रतिफल - शैक्षिक जागरण


भूवनलाल प्रधान

आज देशमा आफ्नै विश्वविद्यालय पनि दुई तीन वटा भैसकेका छन्, अझ एक दुइटा थपिने कुरा चल्दैछ । स्कूल कलेजहरुको त छेलोखेलो नै भैसकेको छ । शिक्षा सम्बन्धी समया छन् त केवल माध्यमिक विद्यालय स्तरमा स्तरीय र सन्तोषजनक पढाइको र क्याम्पस स्तरमा एस.एल.सी. परीक्षामा द्वितीय, तृतीय श्रेणीमा पास गरेका पच्चासौ हजार विद्यार्थीहरुले क्याम्पसमा प्रवेश पाउनामा रहेको कठिनाइको । जे होस् शिक्षा सन्दर्भमा आज देशमा पहलकदमी गर्ने फलाना, फलाना हुन् भनेर अनेकौं शिक्षा प्रचारकहरुका नाम लिइन्छ । तर एउटा खट्किने कुरा के हुन्छ भने त्यस्तो व्यक्तिहरु जम्मैजसो बि.सं. २००७ सालको परिवर्तनपछि मात्र यस क्षेत्रमा कार्यरत भएका सरकारी सेवाका विभिन्न तहका पदाधिकारी देखिन्छन् । तिनीहरुबाट शिक्षा क्षेत्रमा भएको सेवा श्रेयपूर्ण भए पनि त्यो भयो प्रजातन्त्रको संस्थापन भैसकेपछिको कुरो । ज्यान जोखिममा पार्नु नपर्ने भैसकेपछिको कुरा ।

तर खतरनाक राणा युगमा पनि ज्यानको बाजी लगाई लगाईकन शिक्षा क्षेत्रमा अघि सर्ने व्यक्तिहरु निक्कै थिए, जसको चर्चा हिजोआज उस्तो भएको देखिन्न । मानौं त्यस कठिन समयमा यसतर्फ कसैले केही गरेकै थिएन वा कुनै काम भएकै थिएन । बितेको वस्तुस्थितिले के बताउँछ भने त्यस अँध्यारो युगमा पनि समय समयमा पुस्तक प्रकाशित गर्ने, पुस्तकालय खोल्ने, स्कूल सञ्चालन गर्ने प्रयासको सिलसिलामा अपराधी ठहरिन गई सजायँका भागी बनेका अगुवाहरु थिए ।

आज मौजुद रहेको स्थिति स्वत: उब्जेको होइन, न त यो कसैबाट निगाहका साथ प्रदान गरिएको बरदान हो । यो स्थिति तत्कालिन जागृत नवयुवकहरुको समय समयमा निर्भिक रुपले गरेका संघर्ष, कष्टपूर्वक झेलेको यातना, अनि अन्तमा आ-आफ्नैलाई होमेका महायज्ञको प्रतिफल हो, जसको

लेखाजोखा अहिले गर्नु मुश्किलै छ । अतीतलाई बिर्सनु, भविष्यको सपना देख्नु र वर्तमानमा रुमल्लिएर त्यसबारे मात्र उग्रतबरले सोच्नु मानव स्वभाव हो । मानिसहरु प्राय: बर्तमानलाई नै बढी हेर्छन्, वर्तमानमा भएका गतिविधिहरुकै मात्र चर्चा बढी गर्छन् । फलस्वरुप तिनकै मूल्याङ्कन बढी हुन्छ । तर यहाँनिर के कुरा सम्झनु आवश्यक हुन्छ भने वर्तमानको लागि पृष्ठभूमि अतीतमै तयार पारिएको हुन्छ र त्यसरी विभिन्न क्षेत्रमा भएका अगुवाईको उपेक्षा पनि हुनुहुँदैन । उदाहरणार्थ पब्लिक स्कूल संस्थापन बारेकै कुरा गरौं ।

राणा शासनको बिगबिगी चरम चुलीमा पुगेको समय सं.१००९ साल ताकासम्म नेपाल सरकारले आफ्नै स्वाधीनमा एस.एल.सी. परीक्षाको व्यवस्था गरिसकेको थियो तापनि त्यस परीक्षाको सञ्चालन पटना यूनिभर्सिटीको तत्वावधानमा हुन्थ्यो । त्यसबेला काठमाण्डौ, ललितपुर, भक्तपुर, बीरगञ्ज आदि शहरमा मात्र एक एक वटा सरकारी हाइस्कूल चलिरहेको थियो । राजधानीमा जनसंख्याको चाप भने दिनानुदिन बढ्दै थियो । उहाँको एउटा मात्र भएको दरवार हाईस्कूलमा कक्षैपिच्छे भने जसो सेक्सन खोलिदै थियो । देशका भावी कर्णधार बालकहरुलाई सामयिक शिक्षा दिने संस्थाहरुको अभाव र असुविधाले झनझन् उग्र रुप लिंदै थियो । तर सरकारले बाहेक रैती दुनियाँदारले अर्थात जनस्तरले शिक्षण संस्था खोल्न मनाही थियो ।

त्यस्तो भयावह परिस्थिति अन्तर्गत पनि जस्तै खतरा झेल्नु परेपनि पब्लिक स्कूल खोल्नमा सर्वप्रथम अगुवाई गर्न तम्सिएका शिक्षाप्रेमी थिए - चिनियाँलाल सिंह । यिनले काठमाण्डौको खिंल्ह टोलमा "**महावीर इन्ष्टिच्यूट**" को नाउँले एउटा स्कूल सं. १९९३ सालमा खोले ।

गैरसरकारी पाठशाला चलाएर आफ्ना छोराछोरीहरुलाई पढाउनुसम्म पनि छुट नभएको परिस्थिति अन्तर्गत स्थापित भएको **महावीर इन्ष्टिच्यूट** तत्कालिन बन्दी हृदयको एउटा उच्छ्वास थियो, जनजागृतिको प्रवाह थियो, क्रान्ति कीटाणुको जीवकोष थियो, भूमिगत संगनको बाह्यरुप थियो । स्थापनाको केही वर्षपछि नै राणा सरकारद्वारा यसको हत्या भएको थियो तापनि

शैक्षिक क्षेत्रतिर यसको प्रभाव निष्फल भएन । यसको लगत्तै पछि भने जस्तो शान्ति-निकुञ्ज आदि स्कूलहरुले यसको संघर्षशील परम्परालाई कायम राखे । सं.२००२।३ सालताका खोलिएका यी स्कूलहरुले तत्कालिन सरकारसित जोडदार संघर्ष गरेर मात्र आ-आफ्ना अस्तित्व कायम गरेका थिए । तर यो शैक्षिक आन्दोलन **महावीर इन्स्टिच्यूट**द्वारा कायम गरिएको शुरुआतको क्रम मात्र थियो ।

यस महावीर स्कूलबारे खड्गमान सिंह बस्नेतको "शहीदको सम्भना" शीर्षक पुस्तिकामा यसो लेखिएको छ - "स्वर्गीय चिनियाँमान ("चिनियाँलाल" हुनुपर्ने - लेखक) सिंहले हाम्रो राजधानी कान्तिपुरमा "महावीर स्कूल" खडा गर्नुभयो । पब्लिक स्कूलको यो प्रथम रुपदर्शन हो । यसभन्दा अघि कुनै पब्लिक स्कूल थिएन । "

यो स्कूल सं.१९९३ सालमा शिवरात्रीको दिन खोलिएको थियो । काठमाण्डौ खिंल्ह टोलमा चिनियाँलाल र उनका दाजु फत्तेबहादुरकै घरमा यो चलाइएको थियो । यसमा पढाउन शुरु गर्ने शिक्षक आनन्दराम श्रेष्ठ थिए । पछि गङ्गालाल, चन्द्रप्रसाद प्रधान, टङ्क विलासहरुले पनि यसमा पढाउन लागे । यसका शिक्षक र सञ्चालकहरुमध्ये कतिपयको त प्रजापरिषद् वा अरु क्रान्तिकारी गतिविधिसित सम्बन्धित थिए । सरकारी स्वीकृत बिना चलाइएको पहिलो पब्लिक स्कूल हुनु यसको अर्को विशेषता थियो । सं.१९९७ सालको काण्डमा यस स्कूललाई सरकारले बन्दा गराउँदा यसमा कक्षा छ सम्म पुगिसकेको थियो । यसका कैयन शिक्षकहरु पक्रिए, थुनिए, संस्थापकलाई त जन्मभर कैद ठोकियो । आखिर कैदमा नै उनको देहान्त भयो । यसरी पढ्न-पढाउन पाउनाको लागि पनि धेरै यातना भोल्नु परेको थियो । यस गतिविधिमा अगुवाई गर्ने चिनियाँलाल सिंहको त जीवनकै कुर्वानी भयो ।

यी चिनियाँलाल सिंहको जन्म काठमाण्डौ खिंल्ह टोलमा सं. १९६३ साल भाद्र आश्विनतिर भएको थियो । यिनी कुलनारायण सिंहका कान्छा छोरा थिए । त्यस्ताका पाइने जति शिक्षा अर्थात म्याट्रिकुलेसनसम्म यिनले यही

शिक्षा प्राप्त गरेका थिए । सानै उमेरमा यिनमा जागृति आइसकेको थियो । यसैले ब्रिटिस शासनबाट मुक्त हुन त्यस्ताका भारतीय क्रान्तिकारीहरुले गरिरहेको संघर्ष आफ्नै खाँले हेर्न यिनी कैयन पल्ट कलकत्ता गएका थिए पनि ।

यिनले राणा शासनको विरुद्ध जनजागृति ल्याउन खोज्नु नै आफ्नो जीवनको लक्ष्य बनाउने अठोट गरे । यही उद्देश्य अनुरुप यिनले आफ्नो कार्यकलाप जारी राखे । **महावीर इन्स्टिच्यूट** बाहेक अन्यत्र अरु स्कूलहरु खोलाउन पनि यिनले कोशिस गरे । यिनकै प्रेरणामा अर्का कार्यकर्ता चन्द्रमान मास्के र अरुहरुले कालिमाटीमा पनि एउटा प्राथमिक स्कूल खोले । यिनैबाट प्रेरणा पाएर बनेपाका जागृत युवकहरुले पनि उही एउटा स्कूल खोलेका थिए । त्यस स्कूलको उद्घाटन धर्मभक्त माथेमाले गरेका थिए । त्यस स्कूलमा शुक्रराज शास्त्रीले पनि केही दिन पढाएका थिए ।

त्यस सम्बन्धमा खड्गमानजीले आफ्नो "शहीदको सम्झना" मा यसो लेखेका छन् -"वहाँ (चिनियाँलाल) ले शहरका नवयुवक किशोर र वालकहरुमा देशभक्तिको बीजारोपणको निमित्त क्षेत्र तयार गर्ने निक्कै कोशिश गर्नुभयो । बनेपातर्फ वहाँ गएर प्रचार गर्नुभयो । आज बनेपातर्फ जो राजनैतिक चेतना आइरहेको छ त्यो उहाँको देश-प्रेमको फल हो ।" हुन पनि बि.सं. १९९५ सालतिर देखि सं.२००७ सालसम्म उपत्यका र सेरोफेरोमा क्रान्तिकारी गतिविधि जे जति भएको थियो, त्यसमा राजदास, हंसराज लगायत बनेपाका अनेकौं कार्यकर्ताहरुको पर्याप्त सहयोग थियो । यिनीहरुलाई कार्यक्षेत्रमा उतार्नेतिर चिनियाँलालको देन कम थिएन ।

शैक्षिक क्षेत्रमा जस्तै अरु क्रान्तिकारी मोर्चामा पनि यिनी सक्रिय थिए । यसैको सिलसिलामा यिनी सं.१९९७ साल कार्तिक २ गतेको आम गिरफ्तारीमा परे । माघ ६ गते प्रजा परिषद्काण्डको सिलसिलामा सबैलाई फैसला सुनाउँदा चिनियाँलाल सिंह र यिनका दाजु फत्तेबहादुर सिंहलाई जन्मभर कैद ठोकियो ।

भद्रगोल जेलमा तीन चार वर्ष बिताएपछि यिन सं.२००१ सालतिर बिषम जरोको शिकार भए । उनी मरणासन्न अवस्थाम पुगेपछि मात्र यिनलाई बाग्मतीघाट लैजान सरकारले यिनको परिवारका सदस्यहरुलाई इजाजत दियो । त्यस अवस्थामा पनि यिनलाई रिहाई मिलेको थिएन । प्रहरीहरुकै घेरामा यिनी बाग्मती घाट पुऱ्याइए । आखिर घाटमा पुगेको तीन चार घण्टापछि आषाढ २६ गते चिनियाँलाल सिंहको जीवनलीला बन्दी रुपमै समाप्त भयो ।

शहीद हुँदा यिनको उमेर ३८ वर्षको थियो । सत्र वर्षको उमेरमा यिनको बिवाह भएको थियो र हाल उनको धर्मपत्नी र दुवै छोराहरुको पनि निधन भैसकेको छ । जेठा छोरा मदन लोचन सिंहको सं.२००७ सालको परिवर्तमा समेत देन भएका एक राजनैतिक कार्यकर्ताको रुपमा २०२३ साल जेष्ठमा मोटन दुर्घटनामा देहावसान भयो । चिनियाँलाल सिंहका छोरी उषा सिंह र नाति मवि सिंह (मदनलोचन सिंहका छोरा) छन् ।

***(शैक्षिक मञ्च वर्ष २, अंक ४, २०५२ बैशाख)***



# "... चिनियाँ दाइ" पुस्तकको बिमोचन

काठमाण्डौ, असाढ १७ गते । नेपालमा निजी क्षेत्रबाट पहिलोपटक सम्वत् १९९३ मा शहीद चिनियाँलाल सिंहद्वारा स्थापित **महावीर इन्ष्टिच्यूट**को ६६ औ स्थापना दिवसको अवसरमा आज युगकवि सिद्धिचरण श्रेष्ठद्वारा लिखित **"शैक्षिक क्रान्तिका अग्रदत चिनियाँ दाइ"** नामक पुस्तकको काठमाण्डौ महानगरपालिकाका प्रमुख केशव स्थापितले बिमोचन गर्नुभयो ।

वरिष्ठ राजनीतिज्ञ रामहरि शर्माको सभापतित्वमा भएको उक्त समारोहमा राजनीतिज्ञ सूर्य भारद्वाज र उषा सिंह लगायतले सो पुस्तकको बारेमा बोल्नु भएको थियो ।

उक्त इन्ष्टिच्यूटमा शहीद धर्मभक्त, गङ्गालाल र युगकवि सिद्धिचरण श्रेष्ठले पनि अध्यापन गराउनु भएको बताइएको छ ।

***(गोरखापत्र, २०५९।३।१८)***

# चिनियाँ दाईबारे दुई शब्द

✍ पूर्णबहादुर एम.ए.

महावीर इन्ष्टिच्यूट (खीउल टोल बाङ्गेमुढा) का संस्थापक तथा सञ्चालक शहीद श्री चिनियालाल सिंहको एक छोटकरी जीवन साधारण जनताका लागि प्रकाशित हुन लागेको छ । यसबाट यहाँको बारेमा सामान्य जनताले धेर–थोर परिचय पाउनु हुने नै छ । यस्तोमा जहाँ पनि लेखकले संवेदनशील बिषयहरुमा आफ्नो छाप पार्न खोज्ने नै छ, यो कुनै असाधारण कुरो होइन, सामान्य नै छ ।

चिनियाँलाल सिंहज्यूलाई हामीले चिनियाँ दाई भनी भन्छौं । वहाँले सो स्कूल खोल्ने बारेमा मसित पनि सल्लाह गर्नुभएको थियो, त्यसैगरी मैले पनि केही बुढापाकासित पनि सल्लाह (राय) लिएका थिएँ । वहाँले त्यस स्कूल बारेमा आइपर्ने सम्पूर्ण अभिभारा (खतरा) आफूले नै लिने बचन पनि अरुहरुलाई झैं मलाई पनि दिनुभएको थियो । त्यस बेलासम्ममा नेपालभरमा स्कूलको नाममा सिर्फ दरवार हाइस्कूल मात्रै एक स्कूल थियो भने उच्च शिक्षा दिने कलेजमध्येमा त्रिचन्द्र कलेज (दुवै काठमाण्डौ रानीपोखरीको वारिपारि) मात्रै एक कलेज थियो । अरु निजी वा पब्लिक स्कूल वा कलेज कुनै थिएन ।

महावीर इन्ष्टिच्यूट एक प्रकारले प्राथमिक देखिको एउटा स्कूल थियो । सो स्कूल खोलिएपछि केही महिना अर्थात एक वर्ष नबित्दैमा हामीलाई के सुन्नमा आयो भने बिराटनगरमा पनि एउटा अर्को स्कूल खोलिएछ ।

महावीर इन्ष्टिच्यूटको स्थापना भएदेखि यता जनभावनामा एक नौलो भावनाको उदय भयो । एक प्रकारले यसले त्यसबेलाको राणा शासन प्रतिका एक क्रान्तिकारी भावनालाई जगायो । त्यसैले त्यसबेलाको राणा शासन निक्कै नै सर्तक हुन पुग्यो र सके त्यसलाई निमोठ्ने मौकाको खोजीमा थियो ।

चिनियालाल सिंहज्यू मेरो टोलको छिमेकी पनि भएकोले मेरो परिवारको पनि वहाँहरुसित सम्पर्क हुनथाल्यो ।

वहाँ त्यसपछि म पनि १७ सालको पर्वमा पक्रिए पछि वहाँको परिवारसित मेरो परिवारको पनि अरु बढी सम्पर्क हुँदै गयो ।

चिनियाँलाल सिंहज्यू कम बोल्ने, एक नैतिकवान, सरल स्वभावको एक कर्मठ व्यक्ति हुनु हुन्थ्यो । त्यसबेला भारतमा चलिरहेको महात्मा गान्धीको नेतृत्वमा "ब्रिटिश शासन"को विरुद्धको स्वतन्त्रता आन्दोलनको हावा नेपालमा पनि बरोबर आउने गर्थ्यो । त्यसलाई वहाँको पनि नैतिक सहयोग स्वरुप वहाँले गान्धी टोपी पनि लाउने गर्नुहुन्थ्यो ।

आखिर एक दिन वहाँ जेल भित्र नै टाइफाइड ज्वरोबाट सिकिस्त भई, जेलबाट इलाजको निमित्त भनी बाहिर लगिएको केही समयपछि, वहाँ परलोक हुनुभयो ।

नेपाल एक स्वतन्त्र राष्ट्र भएर पनि, वहाँले त्यसबेलाको क्रूर राणा शासनको बिरोध स्वरुप शिक्षा क्षेत्रमा चिराग स्वरुप महावीर इन्ष्टिच्यूट खोली वहाँले आफूलाई बलिदान गर्नु भो ।



# महावीर इन्ष्टिच्यूट थुंगुलिं विरोध

यें (सन्ध्या टाइम्स) । नेपाःया न्हापांगु जनस्तरया स्कूल **महावीर इन्ष्टिच्यूट** स्थापना जूगु थनया थाय्‌मरु खिउंलस्थित छें थुनाब्यूगु खँयात कयाः नेवाः महागुथि नेपाःपाखें विरोध याःगु दु । उगु स्कूल पलिस्था याःगु द्वपनय् जेल सजाय फयेमाःम्ह शहीद चिनियाँलाल सिंहया योगदान हुईकथं छें थुंगु खँय् विरोध यासें वक्तव्यय् उगु ऐतिहासिक छेँ श्री ५ या सरकार वा स्थानीय निकायपाखें अधिकरण यानाः **महावीर इन्ष्टिच्यूट** पुनः चाय्‌केत नं इनाप यानातःगु दु । वक्तव्यय् शहीद चिनियाँलालया हुलाक टिकट पिकाय्‌त नं इनाप यानातःगु दु ।

*(सन्ध्या टाईम्स, चैत्र २७, २०५८)*

# महावीर इन्ष्टिच्यूट – एक इतिहास

विक्रम सम्वत् १९९३ को बसन्तपञ्चमी मञ्जुश्रीको भित्तामा “नमो वागीश्वराय” कोरेर वा कोर्न लगाएर मात्र अघाएन । त्यो असन्तोषले नेपाली युवा जोश जाँगरलाई जागृत गराएको फलस्वरुप त्यतिबेलाका जिउँदा युवकहरुले नमो वागीश्वरायको ढोका उघारी समाजलाई ज्ञान भण्डारमा प्रवेश गराउने अभूतपूर्व उत्साह देखाए ।

अमर शहीद गङ्गालाल श्रेष्ठको साथ लिएर शहीद चिनियालाल सिंहले आफ्नै घर आँगन (काठमाण्डौ खिउँल)मा **महावीर इन्ष्टिच्यूट** नामको पहिलो पब्लिक स्कूल सञ्चालन गर्ने साहस गर्नुभयो । नेपालको इतिहासमा नै अनौठो पन्नाको रुपमा कोरिएको यो साहसिलो कार्यमा सरीक् हुनु भएका तत्कालिन कार्यकर्ताहरुमध्ये शहीद श्री चिनियालाल सिंहलाई उक्त इन्ष्टिच्यूटका प्रिन्सिपल पदको कार्यभार दिइएको थियो भने वीर शहीद श्री गङ्गालाल श्रेष्ठ, स्व.श्री पूर्णबहादुर मानव, श्री पूर्ण बहादुर एम.ए., स्व.इन्द्रप्रसाद राजभण्डारी, श्री टंक विलास बज्राचार्य, स्व.श्री गोरक्षबहादुर श्रेष्ठ, पुण्यनाथ लोहनी, श्री आनन्दराम श्रेष्ठ, स्व. श्री प्रतापबहादुर श्रेष्ठ स्व.श्री हरिभक्त, आदिलाई अध्यापक पदको जिम्मेवारी दिइएको रहेछ । उहाँहरुले आफ्नो भाइ बहिनी तथा टोलियाहरुलाई ल्याई पढाउनु भएको थियो । अमर शहीद श्री गङ्गालालजीले भाइ पुष्पलाल (वर्तमान नेपाल कम्प्यूनिष्ट पार्टीका स्व. नेता) लाई यसै **महावीर इन्ष्टिच्यूट** बाट अक्षरारम्भ गराउनुभएको थियो ।

जनतालाई जगाउने काम गरेको अभियोगमा उक्त इन्ष्टिच्यूटका प्रिन्सिपल लगायत सबै अध्यापकलाई तत्कालिन प्रशासनले बन्दी बनाए । १९९७ सालमा चार जना वीर नेपाली सपूतहरुलाई फाँसी दिनुको साथै **महावीर इन्ष्टिच्यूट**को प्रिन्सिपल श्री चिनियालाल सिंहलाई सर्वश्वहरण र जन्मभर कारावासको सजाय दिइयो, त्यही यातनाको शिकार भई उहाँले जेलभित्रै वीरगति प्राप्त गर्नुभयो । अरु अध्यापकहरुलाई जरिवाना गरी कारागारबाट मुक्त गरेथ्यो । महान् वीर सपूतहरु निर्माण गर्ने **महावीर इन्ष्टिच्यूट** यसरी बन्द गरिएको थियो ।

# श्रद्धा सुमन

*उदयमान श्रेष्ठ, मखन टोल*

*मिति २०५३ पौष ६ गते शनिवार*

श्रद्धेय अमर शहीद चिनियाँलाल सिंहज्यूले संस्थापन एवं सञ्चालन गर्नु भएको **महावीर इन्ष्टिच्यूट**का एक विद्यार्थीलाई चिनियालाल सिंहज्यूकी सुपुत्री मेरी गुरु बहिनी सुश्री उषा सिंहले गत ५/६ वर्ष पहिले देखि इन्ष्टिच्यूटकै परिसरमा बडा सादगी रुपमा अत्यन्त श्रद्धा भक्तिपूर्वक शहीद दिवस तथा महावीर जन्मजयन्ती मनाउन जानकारी दिए जस्तै दिवसमा उपस्थित भई शहीदहरु प्रति श्रद्धा सुमन अर्पण गर्दै आएको छु ।

त्यस स्थलमा बस्दा आफ्नो बाल्यकाल, पढाई स्मृतिपत्रमा उर्लेर आयो । श्रद्धेय गुरुहरु सर्वश्री अमर शहीद गंगालाल, प्रतापबहादुर, बुद्धिप्रसाद शर्मा, कनकबहादुर, गोरखबहादुर, पूर्णबहादुर मानव, अमृतानन्द, टंकविलास, कविवर सिद्धिचरण आदि बडा उत्साही, जाँगरिला तथा समर्पित शिक्षकहरु हुनुहुन्थ्यो । अध्यापन कार्यमा प्रतियोगिता गर्नु हुन्थ्यो । उहाँहरुलाई यस्तो बनाउने इन्ष्टिच्यूटका संस्थापक तथा व्यवस्था गर्ने चिनिया गुरु नै हुनुहुन्थ्यो । काठमाण्डौमा अध्यापन गराउने केन्द्र सर्वप्रथम यही नै हो । सम्बत् १९९५ सालमा मात्र जुद्धोदय स्कूल खोलेको हो ।

अतिरिक्त क्रियाकलाप अन्तर्गत बादविवाद, गायन तथा श्री पञ्चमीको दिन सबै विद्यार्थीहरुलाई स्वयम्भू मञ्जेश्वरी सरस्वती माताकहाँ स्थानीय नेपाल भाषामा रचित सरस्वती बन्दना सामूहिक रुपमा गाउन लगाउने परम्परा थियो । उक्त बखतका नेपालीको आय श्रोत अति कम थियो, कमाउन जाने स्थान छँदै थिएन, छोराहरुलाई पढाउने खर्च पुऱ्याउन सार्है गार्हो थियो, शिक्षा दिनुपर्छ भन्ने भावना समेत थिएन । यस्ता कठिन आर्थिक विपन्नतामा पनि **महावीर इन्ष्टिच्यूट**का संस्थापक तथा प्रधान अध्यापकज्यूले विद्यार्थीको अवस्था विचार गरी नि:शुल्क पढाउने व्यवस्था गर्नु भएको थियो ।

**महावीर इन्ष्टिच्यूट**लाई पुनर्जिवीत गर्न गुरु बहिनीको ठूलो आकांक्षा थियो । त्यसैले स्वर्गीय सम्माननीय प्रधानमन्त्री श्री टंकप्रसाद आचार्यज्यूलाई उहाँकै निवासमा संरक्षक बनाई स्वर्गीय माननीय मन्त्रीज्यू खड्गमान सिंह तथा भूतपूर्व अध्यक्ष माननीय रामहरि शर्माज्यू, जिल्ला शिक्षा अधिकारज्यू तथा

प्रतिष्ठित व्यक्ति तथा विद्यार्थीवर्ग भएको एक समिति गठन भएको थियो । यसको साथै शहीदकी सुपुत्रीले आफूले पाउनुपर्ने अंश समेत नपाएर कष्ट भोगी रहनु परेकोले दूधको दूध पानीको पानी इन्साफ दिलाउन राजदरवार सम्म पुऱ्याउने व्यवस्था तथा पूर्ण सहयोग गरी दिनुहोस् भनी दुई दुई पटक अति विशिष्ट व्यक्तिहरु श्री खड्गमान सिंहज्यू, श्री रामहरि शर्माज्यू तथा श्री टंकप्रसाद आचार्यज्यू आदिलाई अनुरोध गरेको पनि सम्झना छ ।

पखेटा नभए पनि चिनियाँ गुरुको कीर्ति दशै दिशातिर फैलिएको छ । व्यक्तिवादको जमानामा शहीदको देन विर्सनेले शहीदकी छोरीलाई के सहायता देला ?



# बनेपामा चिनियाँलाल सिंहको स्मृति सभा

बनेपा । नेपालका प्रथम शिक्षा शहीद चिनियाँलाल सिंहको सम्झनामा साउन २६ गते काभ्रे मिनिबस सेवा समितिको सभाकक्षमा एक स्मृति सभाको आयोजना गरियो । शहीद चिनियाँलालले बि.सं. १९९३ मा नेपालको पहिलो पब्लिक स्कूल महावीर स्कूलको स्थापना गर्नुभएको थियो । सो स्कूलको शाखा बनेपामा पनि खोलिएको थियो ।

सोही शाखाको पैसठ्ठियौं स्थापना दिवस समारोह मनाउन कार्यक्रमका सभापति हुनुहुन्थ्यो शिक्षासेवी भरतराज श्रेष्ठ । कार्यक्रममा शहीदपुत्री उषा सिंह, चण्डेश्वरी महावीर स्कूलका विद्यार्थी राजेन्द्र जोशी, इतिहासविद् ज्ञानकाजी मानन्धर, काभ्रे क्याम्पसका प्रमुख आशाकाजी श्रेष्ठ, शहीद स्मारक समितिका सचिव दुर्गाबहादुर श्रेष्ठ, प्रकाश शर्मा, ऋषिराम कायस्थ लगायतका वक्ताहरुले वर्तमान अवस्थाको शिक्षा नीति र महावीर स्कूलको स्थापना बारेमा बोल्नु भएको थियो ।

*(साप्ताहिक काभ्रेटाइम्स, वर्ष ६, अंक-३०, २०५९ साउन २८ गते)*

# महावीर इन्ष्टिच्यूटको शाखा चण्डेश्वरी विद्यालय

*भरतराज श्रेष्ठ*

*बनेपा मिति २०५३ पुस*

१०४ वर्षसम्म नेपालमा जहाँनिया राणा शासकबाट जनताहरुको शोषण गर्नुका साथै अन्याय अत्याचार गर्दै आएकाले सो को निमूल गर्न जनचेतना बिना गर्न नसकिने देखेर उपत्यकाका नेवार युवकहरुको भूमिगत गोप्य बैठकबाट "महावीर स्कूल" स्थापना गर्ने निर्णयानुसार १९९३ सालमा खिउल टोलमा शहीद चिनियालाल सिंहको नेतृत्वमा त्यो विद्यालयको स्थापना भएको थियो ।

यसको लगत्तै काभ्रे पलाञ्चोक जिल्लाको बनेपा नगरको श्री माई चण्डेश्वरी भगवतीको पछाडिका सत्तलमा "**महावीर इन्ष्टिच्यूट**"को शाखाको रुपमा स्थापित भएको सो स्कूल शहीद धर्मभक्त माथेमाबाट १९९३ सालमा उद्घाटन गर्नुभएको थियो ।

उक्त चण्डेश्वरीको नामाकरणबाट सञ्चालन गर्न शहीद गंगालाल श्रेष्ठ, धर्मभक्त माथेमा, शहीद शुक्रराज शास्त्री, शहीद चिनियाँलाल सिंह लगायत व्यक्तिहरुबाट पठन पाठ्न गर्दै आएको थियो।

जहाँनिया राणा शासकबाट समाजसेवी सपूत ४ वीर महापुरुषहरुलाई नेपालको कालो रात १९९७ सालमा फाँसीको सजायँ दिई शुक्रराज र धर्मभक्तलाई रुखमा झुण्ड्याइयो भने गंगालाल र दशरथ चन्दलाई गोली हानी मारेको थियो ।

सो घटना भएकोले "महावीर इन्ष्टिच्यूट" र त्यसको शाखाका रुपमा बनेपामा खोलेको चण्डेश्वरी विद्यालय पनि बन्द भयो ।

शहीद चिनियालाल सिंह बनेपालीको भाञ्जाको नामबाट बनेपामा परिचित व्यक्ति हुनुहुन्छ ।

# सम्झनाका दुई थुँङ्गा

सूर्यबहादुर भारद्वाज

*नरदेवी, २०५० भदौ २१*

युगकवि सिद्धिचरण श्रेष्ठद्वारा मेरा मित्र चिनिया दाइबारे लेख्नुभएको पुस्तिका सरसरी हेर्ने अवसर पाइयो । पुस्तिका पढ्दा त्यतिबेला हामीले गरेको कामको मूल्याङ्कन बल्ल अहिले आएर भएको भैं लाग्यो । तापनि त्यति बेला शहीद चिनियालालले गरेको बलिदानमय ऐतिहासिक योगदानलाई संधै जीवित राख्न प्रजातन्त्र स्थापनापछि पनि कसैले वास्ता नगरेको देख्दा तत्कालिन योगदान इतिहासको पानाबाट मेटाउन चाहेको त छैन भन्ने लागेर आउँछ । यसै प्रसँगमा म प्रजातान्त्रिक सरकार एवं शिक्षित समुदायलाई त्यस्तो संस्थालाई पुर्नजिवित तुल्याउन अपील गर्ने अवसरको सदुपयोग गर्न चाहन्छु ।

त्यसमाथि आज विदेशी पुस्तकालयको बाहेक हाम्रो पुस्तकालय भन्नु केवल केशर पुस्तकालय र राष्ट्रिय पुस्तकालय मात्र जेनतेन जिवित अवस्थामा छ, अन्यथा यत्रो शिक्षित समुदाय बीच गतिलो पुस्तकालयसम्म पनि स्थापना गरेर संस्थागत रुपमा राम्ररी सञ्चालन गर्न सकिएको छैन । साँच्चै भन्ने हो भने पुस्तकालय भनेको स्कूल, कलेज र विश्वविद्यालयको पूरक अंग मान्नुपर्छ भने हाम्रो बौद्धिक विकासलाई निरन्तरता दिनु भनेकै पुस्तक अध्ययन हो र अपार पुस्तक सबैले किनेर पढ्न साध्य नचल्ने भएरै पुस्तकालय खोल्ने गरेको हो । त्यो कुरो आजभन्दा ६ दशक अघि त्यस्तो बिकट परिस्थिति भएपनि हामीले महसुस गरेरै स्कूलको साथै महावीर पुस्तकालय स्थापना गरेका थियौं । त्यतिबेला ३००० पुस्तक संकलन गर्न कति छाँया पऱ्यो होला सहज अन्दाज गर्न सकिन्छ । तर ती सबै आज विलिन अवस्थामा पुग्दा कता कता चित्त दुखे भैं लाग्छ । आफूले फेरि गरौं भने बुढेसकालको अशक्त अवथाले गर्दा मन भएर पनि तनले अनुमति दिएन । यो पुस्तकालय पनि निजी क्षेत्रको पहिलो पुस्तकालय हो र यसको आफैं इतिहास छ । खोई यसप्रति कसैको चासो ?

यसरी शैक्षिक जागरणका अग्रगामी व्यक्तित्व रुपमा देखा पर्नु भएका चिनियाँ दाइलाई हामीले त्यतिबेला नै अध्यक्ष (**महावीर इन्ष्टिच्यूट** र पुस्तकालय) मानी उहाँकै निर्देशनमा हामीले शैक्षिक कान्तिको महायज्ञमा लागेका हौं ।

मलाई सम्झना आउँछ – स्कूलको जन्मदिन मनाउन हामी प्रत्येक वर्ष आदेश्वर (काठमाण्डौको पश्चिमस्थित इचंगुनारायणको छेउमा रहेको सम्पा) जाने गर्थ्यौं । जन्मजयन्तीमा खास गरी महाकवि चित्तधर हृदय, युगकवि सिद्धिचरण, इन्द्रप्रसाद प्रधानका साथै त्यति बेलाका जल्दाबल्दा युवा समुदाय निम्त्याइन्थ्यो र जन्मजयन्ती मनाइन्थ्यो । त्यतिबेला त्यसरी जन्मजयन्ती मनाइनुको उद्देश्य तत्कालिन प्रचलित जातभात, छुन हुने नहुने जस्ता कुसंस्कार मिटाई सामाजिक समानता स्थापना गर्न पनि एउटा थियो ।

प्रतिभाशाली अति बेस लाग्ने व्यक्तित्वको रुपमा परिचित चिनिया दाइसँग मेरो पहिलो चिनजानी १९९३ सालमा पूर्णबहादुर नेवा (पछि मानव बन्नु भएका) मार्फत भएको हो । उहाँसँगको परिचय साथै हामी कार्यक्षेत्रमा उत्र्यौं । शैक्षिक, सामाजिक र राजनैतिक जागरणमा सहभागीको रुपमा काम गर्दागर्दै ०९७ पर्वको हाम्रा सम्पूर्ण क्रियाकलाप बन्दीगृहको योजनामा परिणत गराइए र चिनियाँ दाईले त्यही अमर भए ।

उहाँबारे लेखिएको यस पुस्तिकाले हाम्रो शैक्षिक इतिहासको एक पाना उजागर गरेकोमा खुशी लाग्नु स्वाभाविक हो । यसबाट त्यत्ति बेलाको स्थितिबोध गरी भावी सन्ततिलाई शिक्षाको ज्योतिले समाज उज्यालो बनाउन अभिप्रेरणा प्राप्त हुनेछ भन्ने विश्वास गरेको छु ।



# नयाँ पुस्ताले केही गरोस्
# श्रद्धेय शहीद चिनियाँलाल सिंहज्यूको सम्मानको लागि

**नारायण प्रसाद श्रेष्ठ**

वि.स. १९९३ साल फागुन शिवरात्रीको दिन खोलिएको **महावीर इन्स्टिच्यूट** नामको प्रख्यात क्रान्तिकारी स्कूलमा अध्ययन गर्ने सौभाग्य पाएको थिएँ । मैले १९९४ सालदेखि दुई क्लासमा भर्ना भई शिक्षा पाउन थालेको थिएँ । त्यसबेला केही निडर, उत्साही एवं साहसी व्यक्तिहरुबाट राणा सरकारको इजाजत बिना त्यो स्कूल खोलिएको थियो । त्यसैले राणा शासकहरुको क्रूर दृष्टि त्यस स्कूलमाथि शुरु देखिनै परिरहेको थियो । श्रद्धेय गुरु श्री चिनियाँलाल सिंह र फत्तेबहादुर सिंहको आफ्नै निजी घर खिंल टोलमा खोलिएको थियो । नेपालको पहिलो पब्लिक स्कूल हुनु "**महावीर इन्स्टिच्यूट**" को ऐतिहासिक विशेषता थियो ।

शिक्षाको अभावले गर्दा अन्धकारमा मडारिएको तत्कालिन नेपाली क्षितिजमा यो स्कूल पहिलो चम्किलो ताराभैं थियो । यो स्कूलले दिन दुगुना रात चौगुना प्रगति गऱ्यो । विद्यार्थीहरुको संख्या दिनानुदिन बढ्दै गयो र स्कूलमा धमाधम माथिल्ला कक्षाहरु पनि थपिदै गए । लामा लामा सुकुलमा बसी विद्यार्थीहरुले अध्ययन गर्नु पर्दथ्यो । बेञ्चमा बसी पढ्ने सौभाग्य त फोर्थ क्लासमा छ सात जनाले मात्र पाएको थिए । त्यस स्कूलको एउटा अर्को विशेषता थियो ६-६ महिनामा क्लास बढ्न पाइने । जबकि अरु स्कूलमा एक वर्षमा मात्र क्लास चढ्ने हुन्थ्यो । यही विशेषता गर्दा त्यस स्कूलमा अध्ययनरत विद्यार्थीहरु समयको फाइदा उठाउन पाएन । एक सालमा दुई क्लास चढ्ने । यसरी ६/६ महिनामा क्लास चढ्ने भएता पनि त्यहाँको पढाई कुनै सरकारी स्कूलहरु दरवार स्कूल र पाटन स्कूलहरुको भन्दा कुनै हालतमा कम स्तरको हुँदैनथ्यो ।

हामीलाई पढाउने शिक्षकहरुमा श्रद्धेय शहीद चिनियाँलाल सिंह, शहीद गंगालाल श्रेष्ठ, चन्द्रप्रसाद प्रधान, टंक विलास बज्राचार्य, प्रतापबहादुर

राजभण्डारी, गम्भीर बहादुर राजभण्डारी, पूर्णबहादुर नेवा (मानव), कनक बहादुर श्रेष्ठ, गोरखबहादुर श्रेष्ठ, बुद्धि प्रसाद शर्मा, पुण्यनाथ शर्मा, विद्यार्थीहरुको फिस बुझ्ने र पुस्तकालयको हेरचाह चाहिं सूर्य बहादुर भारद्वाजले गर्दथे ।

त्यस स्कूलको अर्को एउटा विशेषता हामी विद्यार्थीहरुलाई एक इण्डियन प्रशिक्षक द्वारा पि.टि. पनि सिकाइन्थ्यो स्कूलको चोकमा । स्कूलमा वार्षिक समारोह र अरु कार्यक्रमहरु बराबर त्यही चोकमा भइरहन्थे । यही क्रममा फोर्थ क्लासबाट प्रमोसन भएका विद्यार्थीहरुको लागि अर्को सेक्सनदेखि थर्ड क्लास खोलिनेछ भने श्रद्धेय गुरु चिनियाँलाल सिंहबाट १९९७ सालको प्राइज वितरणको उक्त समारोहमा घोषणा पनि गर्नुभयो । म पनि सात कक्षाको परीक्षामा प्रथम भई प्रमोशन भएको हुँदा अब आफुले सानै देखि अध्ययन गरेकै स्कूलमा खोलिने आठ कक्षामा पढ्न पाउने भएँ भनी गद्गद् भइयो । शुरु देखिन् प्रथम स्थान लिई पास भइरहने हुँदा मेरा गुरुहरु मलाई अरु स्कूलमा पढ्न पनि प्रोत्साहन दिदैनथे तर १९९७ साल कार्तिकमा महावीर स्कूललाइ पुलिसले घेरा हाल्यो भनेको सुन्ने वित्तिकै त्यही टोलका हामी केटाहरु दौडेर हेर्न आयौ । हाम्रा धेरै शिक्षकहरु तथा घरधनीहरु समेत पक्रिए र स्कूल बन्द भयो । स्कूल फेरि खुल्ने आशामा अरु स्कूलमा नगई करिब एक साल पर्ख्यौं । तर निराश भइयो हाम्रो स्कूल खुल्दै खुलेन ।

२००७ सालको प्रजातान्त्रिक बातावरणमा सबै शिक्षकहरु रिहा भए । तर हाम्रा उत्साहका श्रोत श्रद्धेय गुरु चिनियाँलाल सिंहको २००१ साल असार २६ गते नै बन्दी अवस्थामै देहावसान भइसकेको थियो । अज्ञानको अन्धकार हराई शिक्षा प्रचार गरेकै कारण उहाँले जीवन कै तिलाञ्जलि गर्नुपर्‍यो । शहीद हुनु भयो । रिहा भएको केही दिनपछि म फत्तेबहादुर काका कहाँ भेट्न उहाँको घर खिंउल टोलमा गएँ र अनुरोध गरे कि हाम्रो यो स्कूल फेरि चालु गर्नुपर्‍यो । तपाईले केही पनि गर्नु पर्दैन खाली तपाई स्कूलको (चीफ याने) प्रिन्सिपल भई हामीलाई आदेश र सल्लाह मात्र दिनुस् । यही स्कूलमा पढेका विद्यार्थीहरु धेरै जसो ग्राजुएट भईसकेका छन् । उनीहरुसँग छलफल गर्दा उनीहरु सबै यहाँ

# नयाँ पुस्ताले केही गरोस्
# श्रद्धेय शहीद चिनियाँलाल सिंहज्यूको सम्मानको लागि

नारायण प्रसाद श्रेष्ठ

वि.स. १९९३ साल फागुन शिवरात्रीको दिन खोलिएको **महावीर इन्स्टिच्यूट** नामको प्रख्यात क्रान्तिकारी स्कूलमा अध्ययन गर्ने सौभाग्य पाएको थिएँ । मैले १९९४ सालदेखि दुई क्लासमा भर्ना भई शिक्षा पाउन थालेको थिएँ । त्यसबेला केही निडर, उत्साही एवं साहसी व्यक्तिहरुबाट राणा सरकारको इजाजत बिना त्यो स्कूल खोलिएको थियो । त्यसैले राणा शासकहरुको क्रूर दृष्टि त्यस स्कूलमाथि शुरु देखिनै परिरहेको थियो । श्रद्धेय गुरु श्री चिनियाँलाल सिंह र फत्तेबहादुर सिंहको आफ्नै निजी घर खिंल टोलमा खोलिएको थियो । नेपालको पहिलो पब्लिक स्कूल हुनु "**महावीर इन्स्टिच्यूट**" को ऐतिहासिक विशेषता थियो ।

शिक्षाको अभावले गर्दा अन्धकारमा मडारिएको तत्कालिन नेपाली क्षितिजमा यो स्कूल पहिलो चम्किलो ताराझैं थियो । यो स्कूलले दिन दुगुना रात चौगुना प्रगति गऱ्यो । विद्यार्थीहरुको संख्या दिनानुदिन बढ्दै गयो र स्कूलमा धमाधम माथिल्ला कक्षाहरु पनि थपिदै गए । लामा लामा सुकुलमा बसी विद्यार्थीहरुले अध्ययन गर्नु पर्दथ्यो । बेञ्चमा बसी पढ्ने सौभाग्य त फोर्थ क्लासमा छ सात जनाले मात्र पाएको थिए । त्यस स्कूलको एउटा अर्को विशेषता थियो ६-६ महिनामा क्लास बढ्न पाइने । जबकि अरु स्कूलमा एक वर्षमा मात्र क्लास चढ्ने हुन्थ्यो । यही विशेषता गर्दा त्यस स्कूलमा अध्ययनरत विद्यार्थीहरु समयको फाइदा उठाउन पाएन । एक सालमा दुई क्लास चढ्ने । यसरी ६/६ महिनामा क्लास चढ्ने भएता पनि त्यहाँको पढाई कुनै सरकारी स्कूलहरु दरवार स्कूल र पाटन स्कूलहरुको भन्दा कुनै हालतमा कम स्तरको हुँदैनथ्यो ।

हामीलाई पढाउने शिक्षकहरुमा श्रद्धेय शहीद चिनियाँलाल सिंह, शहीद गंगालाल श्रेष्ठ, चन्द्रप्रसाद प्रधान, टंक विलास बज्राचार्य, प्रतापबहादुर

राजभण्डारी, गम्भीर बहादुर राजभण्डारी, पूर्णबहादुर नेवा (मानव), कनक बहादुर श्रेष्ठ, गोरखबहादुर श्रेष्ठ, बुद्धि प्रसाद शर्मा, पुण्यनाथ शर्मा, विद्यार्थीहरुको फिस बुझ्ने र पुस्तकालयको हेरचाह चाहिं सूर्य बहादुर भारद्वाजले गर्दथे ।

त्यस स्कूलको अर्को एउटा विशेषता हामी विद्यार्थीहरुलाई एक इण्डियन प्रशिक्षक द्वारा पि.टि. पनि सिकाइन्थ्यो स्कूलको चोकमा । स्कूलमा वार्षिक समारोह र अरु कार्यक्रमहरु बराबर त्यही चोकमा भइरहन्थे । यही क्रममा फोर्थ क्लासबाट प्रमोसन भएका विद्यार्थीहरुको लागि अर्को सेक्सनदेखि थर्ड क्लास खोलिनेछ भने श्रद्धेय गुरु चिनियाँलाल सिंहबाट १९९७ सालको प्राइज वितरणको उक्त समारोहमा घोषणा पनि गर्नुभयो । म पनि सात कक्षाको परीक्षामा प्रथम भई प्रमोशन भएको हुँदा अब आफुले सानै देखि अध्ययन गरेकै स्कूलमा खोलिने आठ कक्षामा पढ्न पाउने भएँ भनी गद्गद् भइयो । शुरु देखिन् प्रथम स्थान लिई पास भइरहने हुँदा मेरा गुरुहरु मलाई अरु स्कूलमा पढ्न पनि प्रोत्साहन दिदैनथे तर १९९७ साल कार्त्तिकमा महावीर स्कूललाइ पुलिसले घेरा हाल्यो भनेको सुन्ने वित्तिकै त्यही टोलका हामी केटाहरु दौडेर हेर्न आयौ । हाम्रा धेरै शिक्षकहरु तथा घरधनीहरु समेत पक्रिए र स्कूल बन्द भयो । स्कूल फेरि खुल्ने आशामा अरु स्कूलमा नगई करिब एक साल पर्ख्यौं । तर निराश भइयो हाम्रो स्कूल खुल्दै खुलेन ।

२००७ सालको प्रजातान्त्रिक बातावरणमा सबै शिक्षकहरु रिहा भए । तर हाम्रा उत्साहका श्रोत श्रद्धेय गुरु चिनियाँलाल सिंहको २००१ साल असार २६ गते नै बन्दी अवस्थामै देहावसान भइसकेको थियो । अज्ञानको अन्धकार हराई शिक्षा प्रचार गरेकै कारण उहाँले जीवन कै तिलाञ्जलि गर्नुपऱ्यो । शहीद हुनु भयो । रिहा भएको केही दिनपछि म फत्तेबहादुर काका कहाँ भेट्न उहाँको घर खिंउल टोलमा गएँ र अनुरोध गरे कि हाम्रो यो स्कूल फेरि चालु गर्नुपऱ्यो । तपाईले केही पनि गर्नु पर्दैन खाली तपाई स्कूलको (चीफ याने) प्रिन्सिपल भई हामीलाई आदेश र सल्लाह मात्र दिनुस् । यही स्कूलमा पढेका विद्यार्थीहरु धेरै जसो ग्राजुएट भईसकेका छन् । उनीहरुसँग छलफल गर्दा उनीहरु सबै यहाँ

आई सेवा गर्न तत्पर छन् । भवनको लागि पनि तपाईले चिन्ता नलिए पनि हुन्छ प्याफलको एक घर जग्गा श्री ५ त्रिभुवन सरकारबाट बक्साई लिन हामी प्रयत्न गर्छौं भने । त्यति भन्दा पनि वहाँले केहि चासो लिनु भएन र स्कूल फेरि खोलेर काम गर्न सकिएन । म निराश भई फर्के बालक कालदेखि पढेको स्कूलको मोहले गर्दा र नेपालको पहिलो पब्लिक स्कूल भएकोले ऐतिहासिक महत्वको पनि भएकोले खोलेर राम्ररी चलाऔं भनी विचार गरेको हो । तर फत्तेबहादुर काकाको जवाफले म निराश भएँ र फेरी त्यस विषयमा कहिले पनि कुरा उठाइन । त्यसो त म बराबर वहाँ कहाँ गइरहन्थे । तर यस विषयमा पूर्ण विरामै लाग्यो । प्याफलको त्यही घर जग्गा कान्ति ईश्वरी मा.वि.ले प्राप्त गऱ्यो ।

यसरी शिक्षाको प्रथम किरण फिजाएर मातृभूमि नेपालको मुहारलाई आशाका लहरहरुले खुलाउन चालिएको साहसिला कदमहरुको इतिहास रोकिए । ऐतिहासिक महत्वको त्यो **महावीर इन्ष्टिच्यूट**लाई निरन्तरता दिन नसकिएकोले जन्मदाता महान आत्मालाई कति चोट लागिरहेको होला, सहजै अनुमान गर्न सकिन्छ । धेरै समयपछि भए पनि यस विषयमा आफ्ना भावना पोख्न पाएँ, आफ्ना परमपूज्य गुरुवर श्रद्धेय शहीद चिनियाँलाल सिंहज्यूमा पुष्पञ्जलिको रुपमा **महावीर इन्ष्टिच्यूट**का साहसिला संस्थापक महावीर शहीद चिनियाँलाल सिंहज्यूमा यही मेरो हार्दिक श्रद्धाञ्जलि ! सादर प्रणाम !

मलाई अझै पनि लागिरहेछ **महावीर इन्ष्टिच्यूट**को पुनः सञ्चालन गर्न सक्नु पर्दछ, इतिहासमा विलाउन दिनु हुन्न । नयाँ पुस्ताले केही गरोस् वीर महावीरहरुको त्यो पवित्र कदमको सम्मान गर्ने कार्यमा ।



# शहीद चिनिया महावीर इन्स्टिच्यूटको पुनर्स्थापना

नेपालको वातावरणमा ९७ साल देखि ०४७ सम्मका अमर शहीदहरुको बलिदानको नै प्रमुख भूमिका रहेको छ र ती प्रात:स्मरणीय शहीदहरुको सम्झनालाई जनमानसमा सधैं ताजा राख्नुपर्छ । यस्तो पुनित कार्य ठोस व्यापक र व्यवहारिक हुने कार्यक्रम चाहिन्छ भन्नेमा मताभिन्नता हुन सक्दैन ।

स्मरणीय विषय हो ९३ सामा साहसी युवकहरुद्वारा नेपालमा सर्वप्रथम पब्लिक स्कूल **महावीर इन्स्टिच्यूट**को स्थापना भयो । यो स्कूलको संस्थापक र प्रधान अध्यापक शहीद चिनियाँलाल सिंह नै हुनुहुन्थ्यो । यसका शिक्षहहरु शहीद गंगालाल, आनन्दराम श्रेष्ठ, हरिभक्त, स्व.चन्द्रप्रसाद, स्व.इन्द्रप्रसाद राजभण्डारी, टंक बिलास, प्रतापबहादुर श्रेष्ठ, गोरक्ष बहादुर, न्हुच्छे प्रधान, इन्द्रमान र स्व.पूर्णबहादुर मानव हुनु हुन्थ्यो । यो ऐतिहासिक विद्यालय चिनियाँलाल सिंकै घर खिउलटोलमा स्थापना भएको थियो । सातौं कक्षासम्म खुलेको थियो । यसको प्राङ्गणमा कार्यक्रमहरु हुन्थ्यो । पुस्तकालयको रेखदेख सूर्यबहादुर भारद्वाज गर्नुहुन्थ्यो । यसै स्कूलसँग सम्बन्धित त्यसबखत संस्थापक चिनियालालले बनेपामा एक, कालिमाटीमा एक र जैसीदेवलनिर एउटा प्राथमिक स्कूलहरु पनि खोलिएको थियो । तर यी स्कूलहरुलाई स्वीकृत गर्नु साटो तयो क्रुर राणा शासनले स्कूलहरु बन्द गारयो । सबै शिक्षकहरु पक्राउ गरी थुनियो । ०९७ सालको हत्याकाण्डमा शिक्षकहरुलाई जरिवाना गरि छाडियो । गंगालाललाई फाँसीको सजाय सुनाइयो । प्रधानअध्यापक चिनियाँ-लाल चाहि स्कूल खोली जनता भड्काएको आरोपमा आजीवन कैद ठेकियो । वहाँको देहावसान बन्दी अवस्थाम ानै २००१ साल आषाढ २६ गते भयो ।

यहाँ शहीदहरुको स्मृतिमा को कसले कुन उद्देश्यबाट के कति काम गरे यहाँ उल्लेख गर्नुपर्ने होइन, सर्वविदित कुराहरु छन् । हामी भने हाम्रो योजना अनुसार सबै अमर शहीदहरुको स्मृतिमा काम गर्ने योजना अनुसार शहीद परिवारहरुको सहयोग र शिक्षकहरुको सक्रियतमा शहीद चिनियालाल सिंहले स्थापना गर्नुभएको इन्स्टिच्यूटलाई शहीद चिनियाँ **महावीर इन्स्टिच्यूट**

(३ वर्षे पौढ स्कूल) को स्थापना गर्दैछौं । यसको आसपासको चोक र बहालको कोठाहरुमा बिहान दिउसो र बेलुकी ३ टाइम शहीदहरुको आदर्शमा शिक्षण कार्यहरु चलाएर नेपालमा कस्तो शिक्षा प्रसार चाहिएको छ भन्ने नमूना प्रदान गर्ने छौ भने यसको माध्यमबाट नेपाली समाज र भावी सन्नतिहरुलाई सहीबाटोमा हिडाउने शहीदको आकांक्षा पुरा गर्ने यसबाट राष्ट्रको चौतर्फी बिकासमा योगदान पुऱ्याउने पूर्ववत मेहनत र परिश्रम गर्ने छौं । अत: सबैले आ–आफ्ना क्षेत्रबाट आवश्यक सहयोग पुऱ्याउन सकदो आर्थिक टेवा पुऱ्याईयोस् भन्ने पनि बिनम्र अनुरोध गर्दछौं ।

*आयोजक, शहीद परिवार – शहीद आर्दश अध्ययन समिति*



## माल्यार्पण गरेर मात्र हुन्न

काठमाण्डौ (महानगर) । शहीदको नाउँमा वर्षको एकपल्ट माल्यार्पण कार्यक्रम राख्नु भन्दा शहीदले चाहेका कामलाई संगठित रुपमा अगाडि बढाउँदै लानुपर्ने पूर्वमन्त्री तथा राप्रपाका केन्द्रीय सदस्य जोगमेहर श्रेष्ठ बताउनुभएको छ ।

शहीद चिनियाँलाल सिंहद्वारा स्थापित **महावीर इन्स्टिच्यूट**लाई पुनर्जागृत गर्ने अभियान अन्तर्गत हिजो आयोजित विचार गोष्ठीमा उहाँले उक्त कुरा बताउनुभएको हो ।

उक्त कार्यक्रममा शहीद गंगालाल श्रेष्ठकी धर्मपत्नी हसना श्रेष्ठले शुभकामना सन्देश पठाउनुभएको थियो । शहीद चिनियाँलाल सिंहकी सुपुत्री उषा सिंहको सभापतित्वमा आयोजित कार्यक्रममा शहीद स्मारक समितिका अध्यक्ष प्रकाशधर शर्मा, कवि श्याम मलेकू, नक्साविद् बुद्धिनारायण श्रेष्ठ र मानव अधिकारवादी दिनेश त्रिपाठी लगायतका वक्ताले दासत्वविरुद्ध आवाज बुलन्द गर्ने शिक्षाको ज्योतिकेन्द्र **महावीर इन्स्टिच्यूट**लाई सीपमूलक विश्वविद्यालयका रुपमा उत्थान गर्नुपर्ने बताएका थिए ।

*(महानगर दैनिक, २०६० माघ १२ गते सोमबार, वर्ष १२, अंक ३७)*

# मेरो असाध्य मनपर्ने चिनियाँ पाउको सम्भनामा

प्रा.मृगेन्द्रमान सिंह प्रधान

*२०५९।९।११।५ मा*

म सानै भएकोले धेरै कुरा त सम्भिन सक्दैन तर केही विर्सनै नसक्ने कुराहरु उल्लेख गरिदैछु । मेरो मावली पनि नेपालको पुरानो राजखानदानसित नाता जोडिएको छ । मेरो मुमा गोमतीमैञाँ नेपालमा सर्वप्रथम सं.१९९३ सालमा गैरसरकारी स्कूल **महावीर इन्ष्टिच्यूट** खोले बापत शहीद बन्नु परेका चिनियाँलाल सिंहका सहोदर एक मात्र बहिनी, गोमती मेरो मुमा हुनुहुन्छ । मेरो माइजूहरु श्रीमती भवानी र श्रीमती तुल्सीदेवीलाई कविवर सिद्धिचरणज्यूले पढाउनु हुन्थ्यो । मैले पनि महावीर इन्ष्टिच्यूटमा नै पढ्न मौका पाए । मलाई सम्भना भएअनुसार मेरो मामा चिनियाँलालज्यूले विद्यार्थीहरुलाई गुरुहरुबाट पिट्न दिनु हुँदैनथ्यो र उहाँहरुलाई सम्भाउनु हुन्छ कि बच्चाहरुलाई पिटेर होइन माया गरेर पढाउनु पर्छ ।

१९९७ साल कार्तिक महिनामा अचानक प्रहरीको हुल आएर महावीर इन्ष्टिच्यूट रहेको घर घेरा गरियो । घरमा खान तलासी गर्‍यो । खानतलासीको क्रममा पहिले कोठाको चकटी पल्टाएको थियो । एकदिन अघि मात्र चकटीको मुनि पर्चा राखेको थियो । भाग्यवस त्यो पर्चा त्यहाँबाट सारिसकेको रहेछ । यसको मतलब स्कूलमा आउने मध्ये कसैले खबर पुर्‍याउने रहेछ भन्ने थाहा पाइयो । मेरो मामाहरु दुवैलाई समातेर लग्नेरहेछ भन्ने कुरा थाहा पाए । लग्नु भन्दा अगाडि खाना खान मौका दिएको थियो । मामा चिनियालाल सिंहले त पुरै खाना खानुभयो र उहाँलाई प्रहरीहरुले त्यति वास्ता गरेको थिएन । उहाँ भाग्न चाहनु भएको भए भाग्न सकिन्थ्यो । उहाँको भनाई थियो कि हामीले केही नराम्रो काम गरेको छैन किन डराउने ? मामा फत्तेबहादुर सिंहलाई किताबमा कडा शब्द लेखेको आरोप लगाएको रहेछ । खाना खाँदा पनि प्रहरीले उहाँलाई निगरानी राखिरह्‍यो । उहाँले एक गाँस खानासम्म खान सकेन । मेरो दुवै मामाहरुलाई जीपमा राखेर लगियो । उहाँहरुलाई आजीवन कैद र सर्वश्व हरणको फैसला अनुसार घरमा सर्वश्व लिन आउने भयो ।

मेरो माइजू श्रीमती तुल्सीदेवीको माइती र मेरो घर परिवार दाजुभाइहरु नै थिए । धेरैजसो हाम्रा दाजुभाइहरु जागिरदार नै थिए । सर्वश्व गर्न आउँदा उहाँहरु नै आउनु भएको थियो र उहाँहरुले भन्यो कि के गरौं जागिर खाएपछि आफ्नो काम कर्तव्य त गर्नु नै पऱ्यो । छोरीबेटीको घर पनि सर्वश्व गर्न आउनुपऱ्यो । उहाँहरुले मानवीर इन्ष्टिच्यूट खोलेकै घर सबै सर्वश्व गर्न लाग्यो । मेरो माइजूहरु र साना-साना बच्चाहरु पाटी बास हुने अवस्था हुन थाल्यो । मेरा दुवै माइजूहरु रोएर उहाँहरुलाई अनुरोध गर्नुभयो कि हाम्रो पालेको जेठाजू हुनुहुन्छ जो अहिले तराईमा गएर काम गर्न गइरहेको छ । हामी कहाँ बसौं यी बच्चाहरु कहाँ राखौं भनी धेरै रोएर कराएपछि सर्वश्व लान आउनेहरुले दया गरी माइजू दुवै बस्नलाई र तराइमा बस्ने दानबहादुर मामालाई भनेर घर छुत्याई सर्वश्व गरियो । मेरो बिचारमा माइजूको माइतीको कर्मचारी भएर दया गरेको हो कि जस्तो लाग्यो ।

प्रजातन्त्र आएपछि बि.सं. २००९ सालतिर सर्वश्व फिर्ता गरियो । सर्वश्व गरेको घर बकस लिनेले चोकमा धारा राखेको थियो र उनीहरुले राखेको धारा भनेर निकाल्न आएको थियो । त्यसबेला म पनि माइजू तुल्सीदेवीकहाँ नैं थिए । धारा निकाल्न लागेकोले मेरो माइजू र दाइ योगेन्द्र दुवैले उहाँहरुलाई विन्ती गरेर भन्नुभयो कि राखिसकेको धारा किन निकाल्ने ? यो धारा एउटा हामीलाई नै छाडिदिनुस् भनी विन्तीभाउ गर्नु भएकै कारण धारा काटेर लगेन केही वर्ष पछि मामा फत्ते व. सिंहका नाममा गऱ्यों रे भन्ने पनि सुनियो ।

महावीर इन्ष्टिच्यूट खोलिएको घर जो सर्वश्व हुँदा छोडर गएको घर जग्गा पालेको मामा शंशेर बहादुर (दानबहादुर पनि भनिन्छ) का छोराहरुले बेचियो । सो कुरा पत्रपत्रिकामा पनि निस्कियो । यस घर सम्बन्धी मुद्दा पनि भैराखेको कुरा मलाई पनि थाहा छ । मुद्दा हुँदाहुँदै पनि जबरजस्ती भट्काएर बनाइएको त सबै महानुभावहरुलाई पनि पत्रिका मार्फत थाहै होला । बि.सं.२००१ साल अघिको कुरा मेरो मामाहरु जेलमा छँदा आमा र माइजूसँग

म पनि कहिलेकाही जेलमा जान्थे । त्यहाँ बोल्न पाउँदैनथ्यो । मामाहरुको भोटो लवेदा सुरुवालको तुनाभित्र पत्रहरु हुन्थ्यो । सोही अनुसार कार्य गरिन्थ्यो । हाम्रो दुर्भाग्य मेरो चिनियाँलाल मामालाई ज्वरोले समात्यो हुनसक्छ धेरै यातना र समयमा खाना नपाएरै होला । ज्वरोले निस्लोट् भएपछि औषधी मूलो नपाएर अन्तिम अवस्थामा पुगेपछि हामीले खबर पाएपछि चिनियाँ मामालाई जेलको बाहिर बाटोमा शव आसनमा लेटाईरहेको थियो । हामी भेला भै कुरा गर्न खोज्दा इशाराले म बोल्न सक्दिन भनी इशारा गर्नुभयो चिनियाँ पाउबाट । जीउन् तीउन् गरी चिनियाँ पाउलाई कालमोचन हुँदै बागमतीमा पुऱ्यायौ । बागमतीमा ५० औं जनाको घेराभित्र शवासनमा बसी टुलुटुलु हेरिरहनु भयो । म अगाडि पर्नै नहुने टुलुटुलु मात्र हेरिरहनु हुन्थ्यो । म जहाँ जान्छे त्यही पछ्याउनु हुन्थ्यो । आशा मारिसकेपछि दाह संस्कार गर्न दाउरा खोजी ल्याउन हामी योगी दाइ, सुरेन्द्र भाइ र म त्यहाँबाट दाउरा खोज्न हिड्यौं । फर्कदा त देहावसान भैसकेको थियो । योगीदाइले दाह संस्कार गर्नुभयो । भोलिपल्ट देखि गरुड पुराण पुरोहित बाजेबाट कथा सुनाउनुभयो । मदन दाइ त्यो बेला काठमाण्डौबाट बाहिरै हुनुहुन्थ्यो । अपरान्हकै बेला गरुण पुराण पाठ भैरहेको थियो, वहाँ सोही बेला आइपुग्नुभयो र पिताजीको निधन भएको थाहा पाई ह्वाँ ह्वाँती रुनुभयो । साथै असह्य बेदनाबाट रुदै छटपटिंदै चोकै लडीबुडी गर्नुभयो । पुरोहित बाजेले सम्झाउँदै रोएर देखाउनु हुँदै आदि सम्झाउँदै कूलको मर्यादा राख्न प्रेरित गर्नुभयो ।

२००२ सालमा ठूलो मामा फत्तेबहादुर मात्रै जेलबाट निस्कनुभयो । उहाँहरु स्वयम्भूतिर बस्नु जानुभयो । शहिदको परिवारले हल्चो उद्योग गर्ने भनेर सरकारबाट घर जग्गा पनि दिएको थियो । मामा फत्तेबहादुरले जेलबाट निस्केपछि सर्वश्व गरी बाँकी छोडेर गएको घर जग्गा बेच्न धेरै कोशिश गर्नु भएको थियो । तर माइजू तुल्सीदेवीले घर बेच्न दिन सहमति दिंदै दिनु भएन । त्यसैकारणले मात्र त्यो घर बचिरहेको कुरा हामीलाई राम्ररी थाहा छ ।

२००६ सालतिर मेरो परिवार तौलिहवा जहादि हुँदै मेरो बुवाले राख्नुभएको आफ्नो विर्ता प्रेमचन्द्रपुरमा जानुपऱ्यो। मेरो स्कुलको पढाई छुट्यो। यत्तिकैमा सं.२००७ सालको परिवर्तन भयो । तौलिहवामा रहँदा नै मैले आफूहरुकहाँ गुप्तवासमा आएका मामा शहीद चिनियालाल सिंहका छोरा दाजु मदनलोचन सिंहबाट केही राजनैतिक जागरण पनि पाएँ।

२०४६ साल श्रावण महिनामा विहान सवेरै बहिनी उषाले मलाई फोन गरेर ल्यायो डराएको एकदमै मसिनो स्वर थियो। मलाई लाग्यो उनी धेरै आपतमा परेको जस्तो लाग्यो। तसर्थ म तुरुन्तै बहिनीका गएँ। मैले थाहा पाएँ कि उनले चलाइराखेको कोठा मामा फत्तेबहादुरको बुहारी, भाइ सुरेन्द्रको पत्नी हिमा (भवानी) ले कब्जामा लिएको रहेछ । बहिनीलाई तल माथि गर्नसम्म मुस्कील पारिराखेको पनि देखें। मलाई देख्नासाथ बुहारी हिमाले मलाई गाली गऱ्यो। मलाई धेरै रिस उठ्यो अनि मैले पनि भने - तिमी त मेरो भाइको पत्नी भएर मात्रै नाता हुन आएको, आज म यही मामाघरमा बसी पूजा गर्न आएको। बहिनी उषाले अञ्चलाधिस कार्यालमाय निवेदन दिउको रहेछ। त्यहाँ पनि उनलाई धेरै नै दुःख दिएको थियो। यो घटना मेरो माइजू उषाको आमा (तुल्सीदेवी) स्वर्गवास भएको दुई तीन महिना मात्रै भएको थियो । यदि मेरो मामा चिनियाँलाल जिउँदै भएको खण्डमा आफ्नै घर परिवारबाट यस्तो दुःख हैरानी दिने आँट गर्दैनथ्यो होला।

अन्तमा मेरो प्यारो मामा चिनियाँलालको संस्थापनमा स्थापित महावीर इन्ष्टिच्यूट हाल सञ्चालन गर्न बहिनी उषा सिंह र अन्य शिक्षाप्रेमीहरुले प्रयास गरिरहेकोमा मलाई धेरै खुशी लागिरहेको छ । सक्दो मद्दत मैले पनि गरिरहेको छु। यो स्कूल जीवित गर्नु नै शहीद चिनियाँलाल सिंहको आत्मा सन्तुष्ट हुनेछ।



# महावीर इन्ष्टिच्यूटलाई पुनर्स्थापना गर्ने पहल

काठमाण्डौ । नेपाली इतिहासमा पहिलो प्राइभेट स्कूल मानिने **महावीर इन्ष्टिच्यूट**लाई पुनर्स्थापित गर्न नेपाल प्रजा परिषद्का अध्यक्ष रामहरि शर्माको अध्यक्षतामा ७ सदस्यीय कमिटी गठन भएको छ ।

उपाध्यक्षमा शहीद स्मारक समितिका अध्यक्ष प्रकाशधर शर्मा, सचिव र कोषाध्यक्षमा शहीद चिनियाँलाल सिंहकी सुपुत्री उषा सिंह र सहसचिवमा नक्साविद् वुद्धिनारायण श्रेष्ठ, सदस्यहरुमा तुलसीलाल अध्ययन प्रतिष्ठानका सचिव दुर्गामान खड्गी र समाजसेवी शान्ता धौभडेल हुनुहुन्छ ।

एकतन्त्रीय जहाँनिया राणाशासन विरुद्ध शिक्षाको माध्यमबाट बि.सं. १९९३ मा शहीद चिनियाँलाल सिंहले काठमाण्डौ किलागलस्थित आफ्नै घरमा नि:शुल्क **महावीर इन्ष्टिच्यूट** स्कूल सञ्चालन गर्नुभएको थियो । शहीद गंगालाल श्रेष्ठले अध्यापन गर्नुभएको **महावीर इन्ष्टिच्यूट** सञ्चालन गरेकै कारण बि.सं. १९९७ सालमा चिनियाँलाल सिंहलाई तत्कालिंन राणाशासकले गिरफ्तार गरी आजीवन कारावासका साथै सर्वस्वहरण गराएको कुरा तत्कालिन नेपाल विद्यार्थी संघका महासचिव स्नेहलता वन बताउनुहुन्छ ।

उचित उपचार समेत नपाई जेलभित्रै देहान्त हुनुभएका शहीद चिनियाँलाल सिंहद्वारा स्थापित **महावीर इन्ष्टिच्यूट**लाई पुनर्स्थापित गर्नुपर्ने आवाज शहीद चिनियाँलालकी धर्मपत्नी स्वर्गीय तुल्सीदेवी सिंहले २००७ सालमा पनि उठाउनु भएको बताइन्छ ।

तर हाल **महावीर इन्ष्टिच्यूट**लाई पुनर्जीवित गर्न शहीद चिनियाँलालकी छोरी उषा सिंहले प्रत्येक बहुदलीय पार्टी नेता र मन्त्रीहरुसँग आग्रह गर्दै आउनु भएता पनि कतैबाट कुनै सुनुवाई हुन नसकेकोमा आश्चर्य व्यक्त गरिएको छ ।

शहीद चिनियाँलालको देहान्त पश्चात राणा शासनले सर्वश्व हरण गर्दा चिनियाँलाल सिंहका दाजु शम्सेर दानबहादुर सिंह तराईमा प्रशासकीय कार्यमा लाग्नु भएबाट उहाँको नाउँमा एक भाग छुट्याएर चिनियाँलाल र

निजकै अर्का दाजु फत्तेबहादुरको भागमा पर्ने **महावीर इन्स्टिच्यूट**को घर समेत सम्पूर्ण सम्पत्ति सर्वस्वहरण गरिएको थियो ।

बि.सं. २०११ सालमा टंकप्रसाद आचार्य गृहमन्त्री हुँदा सर्वस्व हरण फिर्ता गरिएता पनि शहीद चिनियाँलालल सिंहको सपना **महावीर इन्स्टिच्यूट**ले पुनर्स्थापित हुन भने पाएन ।

देशमा व्यापारिक प्रयोजनको लागि प्राइभेट स्कूल भनी उद्योगरुपी स्कूलहरु स्थापना हुँदै गइरहेको वर्तमान परिवेशमा शहीद चिनियाँलाल सिंहको ऐतिहासिक शिक्षास्थललाई पुनर्जागरण तर्फ पहल नगर्नुलाई शहीदको भावनामाथि खेलाँची भन्न थालिएको छ ।

शहीद पुत्री उषा सिंह भन्नुहुन्छ- ज्ञात-अज्ञात शहीदहरुको नाउँमा सप्ताहव्यापी कार्यक्रम र मौनधारणले शहीदप्रति सम्मान गरेको ठहरिँदैन, यसको लागि दान भावनामा अड्नुपर्ने शिक्षा नीतिलाई व्यापारिकरण हुनबाट बचाएर शहीदको भावना मुताविक कार्य हुनुपर्दछ ।

नेपाली कम्यूनिष्ट पार्टीका संस्थापक पुष्पलाल श्रेष्ठ, प्रा.माणिकलाल श्रेष्ठ, प्रयागराज जोशी, ईश्वरीमान श्रेष्ठ, प्रभूनरसिंह राणा, जानकीप्रसाद प्रधान र जीवनलाल सत्याल जस्ता राष्ट्रिय हस्तीहरुले ७ कक्षासम्म अध्ययन गर्नुभएको **महावीर इन्स्टिच्यूट**लाई अन्य ठाउँमा घर जग्गा अधिकरण गरेर भए पनि जीवन्तता दिनुपर्ने आवाज उठ्न थालेको छ ।

किलागल थाय्मरुस्थित **महावीर इन्स्टिच्यूट** रहेको घरलाई शहीद चिनियाँलाल सिंहका जेठा दाजु (दानबहादुर) शम्सेर बहादुर सिंहका छोराहरु डा.रामबहादुर सिंह, राजबहादर सिंह र बिजयबहादुर सिंहले स्थानीय केशवप्रसाद श्रेष्ठलाई कसैलाई नसोधी सो घर बेचेपछि उक्त विवाद उब्जिएको हो । शहीद पुत्री उषा सिंह भन्नुहुन्छ - **महावीर इन्स्टिच्यूट** रहेको घर पिता चिनियाँलालका दाजुहरु फत्तेबहादुर र दान बहादुरको पनि भाग हो । तर आफूलाई कुनै जानकारी नगराई उहाँहरुका छोराहरुले घर बेच्नु मेरो आपत्तिको कुरा हो ।

म चाहन्छु श्री ५ को सरकारले **महावीर इन्स्टिच्यूट**लाई पुनर्जागरण गर्ने पहल गरोस् । म मेरो भागमा पर्ने घर स्कूलको लागि प्रयोगमा लगाउनेछु । यसै विषयमा हालै आयोजित एक छलफल कार्यक्रममा सांसद डा. मंगलसिद्धि मानन्धर, शहीद स्मारक समितिका अध्यक्ष प्रकाशधर शर्मा, नेपाल महिला संघकी पूर्व महासचिव स्नेहलता वन लगायतका महानुभावहरुले ऐतिहासिक **महावीर इन्स्टिच्यूट**लाई माग गर्नुपर्ने सुझाव दिनुभएको थियो ।

*(महानगर, २०५८ चैत्र १४ गते बुधवार, पृष्ठ ४, वर्ष १०, अंक ८७)*



## 66TH ANNIVERSARY OF SCHOOL OBSERVED

A function was organised here yesterday to mark the 66th anniversary of founding of the Mahavir Institute, the first private school in Nepal and 96th birth anniversary of its founder Chiniya Lal Singh, the first educator martyr.

Martyr Singh was sentenced to life imprisionment along with confiscation of all his property by the then Rana rulers for establishing the Mahavir Institute at his own house of Bangemudha in 1993 b.S.

Mayor of Kathmandu Metropolitan City Keshav Sthapit, from the chair, said Kathmandu can be developed as a model city if everyone dedicated themselves honestly and diligently in the line of martyr Singh

At the programme chaired by freedom fighter Ramhari Sharma, Mayour Sthapit released a book Shaikshik Krantiko Agradoot Chiniya Dai written by Yug Kabi Siddhicharan Shrestha.

Speaking at the programme Secretary of the institute, Usha Singh appealed for help from all as the institute is in the process of being reopened after a closure for few years.

*[Kathmandu Post, 059/3/19/4]*

# महावीर स्कूल

चिनियाँ लालसिंह महावीर स्कूलका संस्थापक हुन । काठमाडौमा अङ्ग्रेजी पढाउने एउटै मात्र दरबार स्कूल थियो । कोही कोही अङ्ग्रेजी जान्ने कहाँ दुई चारजना विद्यार्थी जम्मा भएर पढ्दै गर्दथे । त्यसै क्रममा १० जनाजति केटाहरु जम्मा गरेर चिनियाँलाल पढाउने गर्दथे । वि.स. १९९० माघ २ गतेको भूकम्पले उनेको घर भत्क्यो । शहरभरि नै विचलित भएको अवस्थामा उनले आफ्नो घरमा केटाहरु पढाउन सकेन । उनैले भूकम्प पिडित उद्धार संस्थाबाट पन्ध्रसय रुपैया सापट लिई घर मर्मत गरे । त्यस बेला रु. पन्ध्र सयले पनि राम्रोसँग घर मर्मत हुन्थ्यो । १९९२ को अन्त्यदेखि फेरि केटाहरु जम्मा गरी आफ्नो नयाँ घरमा राखी पढाउन शुरु गरे । अब घर पनि बनिसकेकोले केटाहरुको संख्या बढ्दै गयो । अनि उनले केही साथीहरुको समेत सहायता मागेर पढाउन थाले । केटाहरुबाट नाम मात्रको फिस लिने पनि प्रबन्ध गरे । त्यही घरमा रहेको हनुमानको मूर्तिको नामबाट त्यस स्कूलको नाम महावीर स्कुल राखियो । म पनि बेलाबेलामा त्यस स्कूलमा जान्थें र पढाउने पनि गर्थे । त्यस स्कूलमा गङ्गालाल श्रेष्ठ, पूर्ण बहादुर श्रेष्ठ, इन्द्रप्रसाद प्रधान, हरिभक्त श्रेष्ठ, बुद्धिप्रसाद उपाध्याय, मधुसुधन देवकोटा आदिले पनि बेला बेलामा पढाउने गरेका थिए । सूर्य बहादुर भारद्वाज र चिनियाँलालले त्यस स्कूलको हिसाब किताब राख्ने गर्दथे । माथिल्लो घरको एक तला बहेक अरु सबै भाग विद्यार्थीको लागि प्रयोग गरिएको थियो । स्कूल खोलेको एक वर्ष पछि तराईमा बसेका उनका दाजु फत्तेबहादर सिंह पनि आएर त्यसमा सम्मिलित भए ।

स्कूलको प्याड र स्ट्याम्प पनि बनाइयो । त्यस स्कूलमा त्यसबेलाका धेरै बुद्धिजीवी आउने जाने गर्दथे । चन्द्रमान मास्केको घर स्कूल घर अगाडि नै भएको हुनाले उनी पनि बराबर आउने जाने गर्दथे । उनीबाहेक शुक्रराजका भाइ रामजी, सुब्बा पूर्ण नारायण र मेरा पिताजी विष्णुचरण श्रेष्ठ लगायत अन्य धेरै व्यक्ति पनि त्यहाँ बराबर जाने आउने गर्दथे । यसरी त्यस स्कूलको उत्तरोत्तर प्रगति हुँदै गएकोले सरकारले चेवाचर्चा गर्न थाल्यो । अनि त्यस स्कूलको विषयमा अनेक हल्ला पनि चल्न थाल्यो । त्यस स्कूलमा कुने गुप्त षडयन्त्र रहेको छ भन्ने आशङ्का पनि गर्न थाले । त्यसै बेला (१९९३ सालको

अन्त्य तिर) नेपाल प्रज्ञा परिषद्का पर्चाहरु पनि देखा परे । हो न हो यी पर्चाहरु यही स्कूलबाट प्रसारित भएको हो भन्ने पनि शङ्का गरियो । यो स्कूललाई सरकारले राम्रो दृष्टिले हेरेन र आँखाले कसिङ्गर जस्तो सम्झन थाल्यो ।

१९९७ साल कार्त्तिक २ गतेको घरपक्कडमा त्यस स्कूलका संस्थापकहरु र त्यसमा लसपस भएका व्यक्तिहरुलाई पक्राउ गरियो । त्यसैबेला मलाई पनि पक्रेर सिंहदरवार स्कूल घरमा पुऱ्याई चिनियाँलाललाई राखेको ठाउँमा राखियो । चिनियाँलाल गम्भीर र बढ्ता नबोल्ने आफूले गरेका काम बडो ध्यान दिएर पूरा गर्ने उनको स्वभाव थियो । उनलाई एकपल्ट तिघ्राको मासुको भित्री भागमा खटेरा आएर चिर्नु परेको थियो, मासु मार्ने औषधी क्लोरोफरम पनि नलिई उनले धैर्यपूर्वक त्यो घाउ चिर्न लगाएका थिए । उनको यो सहनशीलता र धर्मलाई डाक्टरले पनि प्रशंसा गरेका थिए ।

१९९७ सालतिरको कुरा हो, महावीर स्कूलको वार्षिक समारोह गरिएको थियो । त्यसमा चन्द्रमान मास्के सभापति भएका थिए । त्यस सभामा ३०, ४० जना जति मानिस जम्मा भएका थिए । पण्डित मुरली र रामजीको बयानमा पनि त्यो कुरा खुलेकोले त्यस विषयमा सोधपुछ गरिन्थ्यो । जति आपत्ति पर्दा पनि चिनियाँलाल कहिल्यै विचलित भएको मैले देखिनं । जहीले पनि शान्ति र गम्भीरता उनको मुखमा छाई रहन्थ्यो । मैले गरेका कामहरु कुनै अपराध होइनन् यतिमा पनि मलाई सजायँ हुन्छ भन्ने उनले सोच्दै सोचेका थिएन् ।

हामीलाई राखेको कोठाको ठीकसँगै उनका दाजु फत्तेबहादुर र गंगालाललाई राखिएको थियो । फत्तेबहादुर भन्दा दश वर्षले जेठा भए तापनि एक किसिमले उनी मेरा पिताका पनि साथी जस्ता थिए । स्कूललाई अगाडि बढाउनाको निम्ति उनले धेरै काम गरेका थिए । आफ्नो मातृभाषा नेवारीको पनि उनी भक्त थिए । उनले एउटा लामो भूमिकाको साथै "नेपाली बिहार" कविता संगह पनि भारतको बेतिया बाट छपाएर ल्याएका थिए । त्यसमा मेरो तीन ओटा कविताहरु पनि संग्रहित थिए । ती कविताहरुमा पनि सोधपुछ गरियो । "क्रान्ति बिना शान्ति हुँदैन" भने मेरो बाक्य त सबै पक्राउमा परेर

आएकोहरुलाई यसको अर्थ के हो भनी सोधिने बन्द सवालको बुँदा भयो । स्कूल घरबाट हामीलाई अहिले ससंद भवन भएको चौरमा सार्दा उनी र पूर्णबहादुर श्रेष्ठ एउटै पालमा रहेका थिए । मसँग फत्तेबहादुरलाई राखिएको थियो । उनीसँग वास्ता र कुराकानी गर्दा मलाई ढाढस हुन्थ्यो । उनले आफूले गरेका वयानहरु, सोधिएका प्रश्नहरु मलाइ सुनाउँदथे । स्कूल घरमा प्रजापरिषद्का सदस्यहरुलाई मात्र राखी हामीलाई यता सारिएकोले हामीलाई सजायँ हुँदैन, सजाय भए तापनि हलुका सजाय मात्र हुन्छ भन्ने हाम्रो धारणा थियो । घरबाट दुई दाजु भाइलाई पक्रेर ल्याएकोले उनको घरमा नाबालक केटाकेटी र उनीहरुका श्रीमती बाहेक अरु कोही थिएनन् । उनीहरुलाई साँझ बिहान खान पुऱ्याउन पनि आइमाईहरु नै आउने गर्दथे ।

त्यही माघ ८ गते फैसला सुनाइयो । चिनियाँलाललाई आजीवन कारावास र अंश सर्वस्व र मलाई १८ वर्ष कारावास र अंश सर्वस्वको सजाय सुनाइयो । १० गते हामीलाई भद्रगोल जेलमा पठाइयो । विभिन्न कैद सजाय ठोकेका २८ जना हामी जेलमा राखियौं । ४ जनालाई ज्यान सजाय भएको थियो । ३ वर्षसम्म हामी जेलमा रहँदा चिनियाँलालको धैर्य र सहनशीलताको परिचय पाइयो । उनी कहिल्यै पनि विचलित भएको देखिन्न । जे जस्तै खानु परे पनि उनी सन्तुष्ट नै मान्दथे । एकदिन उनलाई ज्वरो आयो । असाध्यै कपाल दुख्ने । जेलको डाक्टरद्वारा कति इलाज गरियो तर निको हुनाको साटो झनझन् बढ्दै गयो । पीडाले उनी रातभर सुत्न सक्दैनथे । घरबाट भाउजुहरुले प्रधानमन्त्रीलाई विन्तीपत्र हालेर बाहिर अस्पतालमा उपचार गराउन अनुमति पाएँ । बिहानको १० वजेतिर हुँदो हो उनलाई अस्पताल लैजानको निम्ति बाहिर ढोका मानिस आएको खबरले हामी ४।५ जनाले उनलाई स्ट्रेचरमा हाली जेलको मूल ढोकासम्म पुऱ्याएका थियो । अब त अस्पताल लगेपछि चाँडै निको होला भन्ने आशा गरेका थियौं । त्यहीदिन ५।६ बजेतिर खबर आयो चिनियाँ दाइको निधन भयो । हामी जेलभित्र सबै साथीहरु सन्न रह्यौं । नेपाल आमाको दुःख दर्द मेट्न खोज्ने एक योद्धाको मृत्यु भयो । देशव्रतको तपस्यामा एक वीरको बलिदान भयो ।

*(मधुपर्क, वर्ष २४, अंक ९ पूर्णाङ्क २७२, माघ २०५८)*

# मेरो सम्झनामा चिनियाँ र महावीर

*अशोक बहादुर अमात्य*

केही शिक्षित यूवाहरुलाई महसुस भयो कि नेपाल अधिराज्यमा शिक्षा दिक्षालगायत नागरिक अधिकार, जनताको लेख्ने, बोल्ने र पढ्ने अधिकार त्यस ताका श्री ३ भनिने जहाँनिया राणा सरकारले दिइरहेको थिएनन् ।

पढ्ने, लेख्ने र बोल्न पाउने नैसर्गिक अधिकार पाउनुपर्छ भन्ने महसुस गरी एउटा गोप्य पाठशालाको स्थापना गर्ने जमर्को गरेका थिए ।

श्री चिनियाँलाल सिंहज्यूले हुन त व्यक्तिगत रुपमा एक्लै भएपनि आफ्नो घरको कोठामा छिमेकी तथा इष्टमित्रका बालबच्चा तथा केटाकेटीहरुलाई पढाउन शुरु गरिसकेका थिए ।

यसरी संगठित रुपमा राणाहरुको शिक्षा नीति विरुद्ध जनताका छोराछोरीहरुलाई गोप्य रुपमा पाठशाला खोली पठन पाठन शुरु गर्नेहरुमा सर्वश्री चिनियाँलाल सिंह, श्री शुक्रराज शास्त्री, गंगालाल श्रेष्ठ, धर्मभक्त माथेमा, चन्द्रमान सिंह मास्के, पूर्णबहादुर एम.ए., सूर्यबहादुर भारद्वाज, मोहनबहादुर अमात्य (काकाभाइ) अन्य धेरै मित्रहरु थिए भनेर मेरो स्व. पिता मोहनबहादुर अमात्यले सर्लाही जिल्लाको मूर्तियामा अवस्थित राजनीतिक पिडित बसोबास क्षेत्रमा रहेको सानो झुपडीको सानो कोठामा लम्फा बत्तीको मधुरो प्रकाश मुनि प्राय राति मलाई सुनाउनु हुन्थ्यो ।

अब शुरु गरौं मेरो स्व.पिता मोहनबहादुर अमात्यको संक्षिप्त जीवनका साथै वहाँको यस **महावीर इन्स्टिच्यूट**सँगको संलग्नता – श्री मोहनबहादर अमात्य (ककाभाइ) को ४ वर्षको उमेरमा माता दिल्लीकुमारीको स्वर्गवास र ९ वर्षको उमेरमा पीता लालबहादुर अमात्यको स्वर्गारोहण भएपछि वहाँलाई भिषण बज्रपात शुरु भयो ।

तत्पश्चात वहाँको दाजु चन्द्रबहादुर अमात्यको ब्यापारिक व्यस्तताले गर्दा वहाँको शिक्षादिक्षामा ध्यान पुऱ्याउन सक्नु भएन । सो कुरा टोलका गन्यमान्य व्यक्तिहरुले थाहा पाई एकदिन छलफल गरी टोलकै प्रख्यात गुरुद्वय

भक्तपुर दत्तात्रय मठका पीर महत श्री कालिका प्रसाद गिरी इन्द्रचोक (चोखाछें गली) कहाँ जिम्मा लगाई दिनु भएको थियो । धेरै समयपछि गुरु कालिकाप्रसाद गिरी बडाहाकिम भई तराई प्रदेशमा कागजमा जानु परेको हुनाले वहाँलाई गुरु श्री माधवराज जोशी (बाङ्गेमुढा) कहाँ अरु पढ्नको लागि पठाई दिनु भएको थियो । त्यहाँ वहाँले ज्योतिषशास्त्र विषय पढ्नु भयो भने त्यही समयमा गुरु शुक्रराज शास्त्रीसँग अंग्रेजी विषय र नागरिकशास्त्रको अध्ययन गर्नुभएको थियो ।

सधैं झै गुरु शुक्रराज शास्त्री कहाँ पढ्दै गर्दा गुरुबाट विषय समाती विभिन्न प्रश्नहरु सोधनी भएछ र उत्तरहरु फटाफट भन्दै जाँदा यत्तिकैमा त्यहाँ श्री चन्द्रमान सिंह मास्के आइपुग्नु भएको रहेछ र यी दुवै बीच केही समय संवाद भए पछि दुवै जनाले एकै स्वरमा भन्नु भएको रहेछ हेर ककाभाई तिमीले अबदेखि पढ्न मात्र होइन, तिमी जस्तो युवकहरुलाई पढाउने काम पनि गर्नु । यसो गर्दा तिम्रो पढाई अरु तेजिलो हुन्छ । आजलाई यति नै भयो भोलि त अति चाँडो आउनु ।

यसै क्रममा भोलिको दिन– श्री मोहनबहादुर गुरु कहाँ चाँडो पुग्नु भएछ । गुरु शुक्रराज शास्त्री कहाँ त्यसदिन पढाईको सट्टा मित्रहरुसँग चिनजान र पढाउने स्थानबारे छलफल भएको थियो । जसमा सर्वसम्मतबाट श्री चिनियाँ लाल सिंहको घरमा पढाउने काम थालनी गर्ने निधो भयो ।

यसरी गोप्य रुपमा पठन पाठन गरिएको बाङ्गेमुढा स्थित चिनियाँलाल सिंहज्यूको घर आँगनमा भगवान महावीरको मूर्ति रहेछ । सोही भगवानको नामबाट सर्वसम्मत भई यस गोप्य पाठशालाको नाम महावीर इन्ष्टिच्यूट नामाकरण गरिएको थियो । यस पाठशालामा पढाई राम्रो हुने हुनाले विद्यार्थीहरु संख्या दिन प्रतिदिन बढ्दै गयो । सो पाठशालाको प्रगतिको हेर्न नचाहनेहरुको एक समुहले एक दिन राणाका गुप्तचरहरुलाई यस **महावीर इन्ष्टिच्यूट**मा राजनीतिक शिक्षा र सरकार विरोधी क्रियाकलाप गर्दोरहेछ भन्ने खबर पठाएछ । यसबारे श्री चिनियाँलाल सिंहले आफ्नो सदस्यबीच यस बिषय छलफल गर्नुहुन्थ्यो तर कसैमा पनि डर र त्रास भने थिएन ।

एक दिन सोही खबरको आधार मानी राणा सरकारका आठ पहरियाहरु घरपक्कड शुरु गऱ्यो । जसमा चिनियाँलाल सिंह, फत्तेबहादुर सिंह, पूर्णबहादुर एम.ए., सूर्यबहादुर भारद्वाज, चन्द्रमान मास्के लगायत प्राय सम्पूर्ण साथीहरु (समातिए) पक्राउमा परे । पक्राउबाट बचेकाहरुले इन्ष्टिच्यूट सञ्चालन गर्ने अवस्था नरहेपछि अन्य गोप्य राजनीतिक संगठनतिर आवद्ध हुन पुगेको थियो ।

उता जेलभित्र श्री चिनियाँलाल सिंहज्यू स्वास्थ्योपचार बिना छट्टपटाई रहनुभएको थियो भनी खबरहरु आइरहन्थ्यो । तर निर्दयी राणा सरकारको अगाडि कसको के लाग्थ्यो । एकदिन स्वास्थ्योपचार बिना नै जेलभित्र श्री चिनियाँलाल सिंहज्यूले बीर अमरत्व प्राप्त गर्नुभयो भन्ने वहाँको नश्वर शरिरलाई त्रिपुरेश्वर अवस्थित कालमोचन घाटमा मोचित भई वीर शहीत्व प्राप्त गर्नु भएको थियो । यसरी लालाबाला तथा युवकहरुका श्रद्धेय गुरु एवं नेपाल आमाका कर्मठ पुत्र शिक्षा पद्धतिका विद्व नेपाल भूमिबाट अन्तरध्यान हुनुभएको थियो ।

राजा त्रिभुवनले श्री चिनियाँलाल सिंह जस्तो होनहार शिक्षाको पुजारी क्रान्तिकारी युवक शहीत्व प्राप्त गरेको खबरले भावविह्वल हुँदै गहभरि आशु राखी राणाहरुको काम यस्तै हो, अब यिनीहरुको धेरै खैरत छैन, साथीहरुलाई हिम्मत जुराउनु नफुट्नु है भनी मर्जी भएको थियो भनी मेरो स्वर्गीय पिता मोहनबहादुर अमात्यले भन्नु भएको थियो । यस घटनापछि काठमाण्डौको कुनाकुनामा राणा विरोधी पर्चाहरु गोप्य रुपमा छर्न थाल्यो । प्रजाहरु झन् शसक्त हुँदै गयो । देशमा राजतन्त्रीक प्रजातन्त्रको प्रारम्भ (प्रादुर्भाव) भयो तर शहीद चिनियलाल सिंहज्यूले प्रवर्द्धन गर्नु भएको जस्तो शिक्षा प्रणाली आउन सकेन यो भिन्नै कुरा हो । तर प्राजातन्त्रको प्रादुर्भाव भएपछि यस **महावीर इन्ष्टिच्यूट**लाई पुनः सञ्चालन गर्न न त सरकारीस्तरबाट नै कोशिश गऱ्यो न पार्टीका तर्फबाट नै न त यस **महावीर इन्ष्टिच्यूट**का पुराना सदस्यहरुबाट नै । यसलाई विडम्बना नभने के भन्ने ? यसरी हाल चन्द्रमान सिंह मास्के मार्ग (बाङ्गेमुढा) मा रहेको शहीद चिनियाँलाल सिंहज्यू **महावीर इन्ष्टिच्यूट** नेपाल

आमाको गर्भमा नै बिलाएर गयो । तर वहाँले थालनी गरेको शिक्षाको प्रचार आज नेपाल अधिराज्यभरि नै फैलिंदै गइरहेको छ, त्यो सूर्यको किरण झैं ।

जहाँनिर एक टुक्रा राजनीतिक कुरा थप्न मन लाग्यो जुन कुरा प्रायः मेरो पिता मोहनबहादुर अमात्य (ककाभाई) प्रायः भनिरहनु हुन्थ्यो– हामीले जुन दुःख कष्ट सहेर इङ्गलैण्ड (ब्रिटेन) को जस्तो प्रजातन्त्र पद्धति स्थापना गरौं भनेर राणाहरुको विरुद्ध लागेका थियौ प्रजातन्त्र प्राप्त पछि त्यस्तो अवस्था रहेन भनी दिक्दार मानी २०४७ कार्तिक ७ गते दिन स्वर्गारोहण हुनु भयो ।

अस्तुश्री

*मैले सम्झना भए जति मात्र लेखेको, मितिहरु याद भएन । प्रथम पटक कलम चलाएको हुनाले भुलचुक भए क्षमाप्रार्थी छु ।*



## नेपालको पहिलो पब्लिक स्कूल "महावीर इन्ष्टिच्यूट" लाई महान् वीर शहीदहरुको सम्झनामा पुनः सञ्चालन गरौं ।

प्रातः स्मरणीय महान् वीर शहीदहरु तथा साहसिला कार्यकर्ताहरुको बलिदानबाट १९९३ सालमा जनताले जनताको लागि जनताबाटै सञ्चालन गर्ने गरी स्थापना गरिएको नेपालको त्यो पहिलो पब्लिक स्कूल पुनः सञ्चालन गर्नु ती सम्पूर्ण महान् वीरहरुको सम्मान गर्नु हो ।

नेपाली सबैको उत्थानको लागि त्यतिबेला देखिनै जनताले परिचालन गर्दै आएको अभियानको सफलताको रुपमा प्राप्त हुन आएको वर्तमान पूर्ण प्रजातान्त्रिक वातावरणमा उक्त इतिहासलाई ताजा राख्नु पनि नागरिक कर्तव्य हो भन्ठानी उक्त स्कूलका शहीद प्रिन्सिपल श्री चिनियाँलाल सिंहको नाम जोडी पुनः सञ्चालन गर्ने कार्यमा सबैबाट सहयोग हुने विश्वास लिएका छौं ।

महावीर शहीद चिनियालाल सिंह इन्ष्टिच्युट अथवा **महावीर इन्ष्टिच्यूट– शहीद चिनियालाल सिंह स्मारक विद्यालय** सञ्चालन गरेर समर्पित महान् वीरहरु प्रति सच्चा श्रद्धाञ्जलि अर्पण गरौं । यही हाम्रो अपील छ ।

***-शहीद चिनियालाल सिंह स्मृति क्लब***

# चिनियाँलाल सिंह

*मुक्ता श्रेष्ठ*

२००१ साल आषाढ २६ गतेको दिन । त्यो दिन आकाश बादलले ढाकिएको थियो । कहीं कतैबाट सूर्यको किरणसम्म देखापरेको थिएन । बिहान नौ बजे भद्रगोल जेलको ढोकाबाट एउटा स्ट्रेचर बाहिर ल्याइयो । स्ट्रेचरमा ज्वरोले निस्लोट भएको एकजना बन्दीलाई सुताइएको थियो । बिरामीलाई सिधै बागमती त्रिपुरेश्वर घाटमा लगियो । घाटमा पुगेको चार पाँच घण्टापछि उनको देहान्त भयो । यसरी त्यो दिन अँध्यारो समाजलाई उज्यालो दिन खोल्ने एउटा बत्ती निभ्यो । एक जना परिवर्तनकामी समाजसेवीको मृत्यु भयो ।

हो, उनी मास्टर चिनियाँलाल सिंह थिए । उनी महावीर स्कूलका संस्थापक थिए । राणाकालको अँध्यारो रातमा उज्यालो छर्न चाहने शिक्षाप्रेमी व्यक्ति थिए उनी । केटाकेटी उमेर देखि नै टोल छिमेका केटाकेटीहरुलाई घरमा ल्याएर पढाउने बानी थियो उनको । ९० सालमा आएको भुइचालोमा घर चर्किएर बस्न नहुँदा पनि उनले केटाकेटीहरुलाई पढाउन छाडेनन् ।

त्यसबाहेक, उनी समाजसेवी पनि थिए । टोल, छरछिमेकमा दुःख परेका सबैका लागि अन्यन्तै सहयोगी थिए चिनियाँलाल । बिरामी परेकोमा बिरामी कुर्न पुगिहाल्ने, बिरामीलाई घाटमा लैजाँदा घाटमै कुर्न बस्ने, मर्दा पर्दा सहयोग गर्न पुग्ने जस्ता कामहरुमा उनी बिना हिच्किचाहट अग्रसर भइहाल्थे ।

यिनै शिक्षाप्रेमी तथा समाजसेवी चिनियाँलालले १९९३ सालमा फागुन शिवरात्रीको दिन आफ्ना साथीहरुलाई आफ्नै घरको चोकमा बोलाएर एउटा सभाको आयोजना गरे । सो सभाबाट उनको घरमा विधिवत् रुपमा एउटा स्कूलको स्थापना भयो । चोकमा रहेको हनुमानको नाममा स्कूलको नाम महावीर स्कूल राखियो । स्कूलमा पढाउने मास्टरहरु थिए–गंगालाल श्रेष्ठ, कृष्णबहादुर मानन्धर, टंक विलास बज्राचार्य, मधुसुदन देवकोटा, सूर्यबहादुर भारद्वाज, हेमबहादुर माली, बुद्धिप्रसाद शर्मा आदि ।

चिनियाँलाल घर घरमा गएर पढ्ने विद्यार्थीहरु जम्मा गर्थे । कापी, कलम, पुस्तक किन्न नसकेकाहरुलाई आफैं किनेर दिन्थे ।

विस्तारै विद्यार्थीहरु बढ्दै गए । घरको बुइगलबाहेक सम्पूर्ण घर स्कूललाई सुम्पिइयो । महावीर स्कूललाई सरकारी स्वीकृतिको लागि प्रयत्न गरियो । तर सरकारले स्वीकृति प्रदान गरेन । त्यो स्कूलको शाखा बनेपामा पनि खोलियो । बिस्तारै बिस्तारै त्यो स्कूल समाज परिर्वतन गर्न चाहने युवाहरु जम्मा हुने, देशको स्थितिबारे छलफल गर्ने थलोको रुपमा बिकास हुन थाल्यो ।

महावीर स्कूल राणाविरोधीहरुको स्कूल हो, त्यस स्कूलका मास्टरहरु जातभात मान्दैनन् । त्यस स्कूलमा राणाहरु ढाल्ने षड्यन्त्र भइरहेछ– जस्ता चर्चा परिचर्चा तथा हल्लाहरु हुन थाले राणाका गुप्तचरहरुले त्यहाँ दिन रात चियो चर्चा गरिरहन्थे ।

भारतमा अंग्रेज शासनको विरुद्ध भारतीय जनताहरु आन्दोलनमा उत्रिरहेका थिए । त्यस खबरले नेपालका स्वतन्त्र बिचारका युवाहरुमा पनि जोश र जाँगर बढ्न थाल्यो । यसै सयमा नेपाल प्रजा परिषद्का पर्चाहरु देखिन थाले । महावीर स्कूलमा भारतमा भइरहेको आन्दोलन र प्रजा परिषद्ले निकालेको पर्चाबारे चर्चा परिचर्चा हुन्थ्यो ।

१९९७ सालमा प्रजा परिषद्को पोल खुलेपछि त्यसका सदस्यहरुको गिरफ्तारी शुरु भयो । त्यसैक्रममा समाजसेवी, शिक्षक, दैनिक समाचार पढ्ने आदि व्यक्तिहरुलाई पनि राणा सरकारले गिरफ्तार गर्न लाग्यो । त्यही सिलसिलामा चिनियाँलाल सिंह र उनका दाजु पनि गिरफ्तारीमा परे । उनीहरुलाई सर्वस्वसहित आजीवन कैदको सजायँ तोकियो र भद्रगोल जेलमा पठाइयो ।

चिनियाँलाल सिंह जेलमा पनि कहिल्यै पनि बिचलित भएनन् । घरमा एक श्रीमती र ३ छोराछोरीहरु थिए । तर घर परिवार सम्झेर कहिल्यै पीर गरेनन् उनले । जेलभित्र कुनै अन्याय भयो भने पनि उनी डटेर विरोध गर्थे ।

उनीहरु जेल परेको करिव १ वर्षपछि राजबन्दीहरु राखिएको ठाउँमा चारैतिरबाट पर्खाल लगाएपछि राजबन्दीहरु रहेको जेलमा न त घाम छिर्न सक्थ्यो, न उनीहरु हिंडडुल गर्ने ठाउँ नै हुन्थ्यो । राजबन्दीहरुले १०/१२ हात पर सारेर पर्खाल लगाउने माग गरे । तर त्यो मागलाई जेलका कर्मचारीहरुले

वास्ता नै गरेनन् । एक दिन चिनियाँलाल सिंह र खड्गमान सिंह पर्खालमा लम्पसार परे । उनीहरुले डकर्मीहरुलाई पर्खाल लगाउन दिएनन् । उनीहरुलाई त्यहाँबाट हटाउन सिपाहीहरु र कप्तान समेत आएर अनेक प्रयास गरे । तर उनीहरु एक पाइला पनि पछि हटेनन् । आखिर २/४ दिनपछि उनीहरुको माग पूरा भयो । १०/१२ हात पछि हटाएर पर्खाल बनाइयो ।

एकदिन उनी टाउको दुख्यो भनेर खास्टोले टाउको बाँधेर सुते । अलि अलि ज्वरो पनि आउन थाल्यो । त्यसै समयमा टि.ए.बी.सी.को इन्जेक्सन दिन अस्पतालका कर्मचारीहरु जेल पुगे । अलिअलि ज्वरो आए पनि इन्जेक्सन दिन हुन्छ भनेर कर्मचारीहरुले इन्जेक्सन दिएर गए । तर चिनियाँलाललाई ज्वरोले झनझन् च्याप्न थाल्यो । जेलको डाक्टर आएर हेर्‍यो । टाइफाइडको शंका गरेर औषधी दियो । ज्वरो निको हुनुको सट्टा दिनपरिदिन चर्को हुँदै गयो ।

उनी बिरामी भएको खबर घरमा पनि पुग्यो । उपचार गराउन उनलाई जेलबाहिर ल्याउन उनकी श्रीमतीले तत्कालिन राणा प्रधान-मन्त्रीमा बिन्तीपत्र हालिन् । तर त्यो बिन्तीपत्रमा प्रधानमन्त्रीले चासो देखाएनन् । बल्लतल्ल अन्तिम अवस्थामा उनलाई जेलबाहिर ल्याएर उपचार गर्न प्रधानमन्त्रीले अनुमति दिए । २००१ साल आषाढ २६ गते बिहान ९ बजे उनलाई जेलबाट बाहिर लगियो र हस्पिटल लान खोजियो । तर उनको स्थिति ज्यादै नाजुक भइसकेको थियो । अस्पताल लगेर केही फाइदा पुग्ने आशा देखिएन । त्यसैले, उनलाई जेलबाट सिधै घाट पुर्‍याइयो । त्यी दिनको ५/६ वजेतिर उनको मृत्यु भयो । शहीदको नामावलीमा उनको पनि एउटा नाम थपियो ।

यसरी, राणाहरुहरुको अत्याचारले देशले एकजना सपूतले ज्यान गुमाउनुपर्‍यो । देशले एकजना देशभक्त र शिक्षाप्रेमी समाजसेवीलाई गुमाउनुपर्‍यो ।

*(नव युवा मासिक, वर्ष ३, पूर्णाङ्क २१, २०५४)*



# शैक्षिक क्रान्तिको पहिलो मोड "महावीर इन्ष्टिट्यूट"

उषा सिंह

युगले कसरी पल्टा खान्छ अथवा यसो भनौ परिवर्तनको हुरीलाई जसले जतिसुकै रोक्ने प्रयास गरे तापनि रोक्न सक्तैन भन्ने तथ्यलाई कसैले नकार्न सक्तैन । परिवर्तनशील युगलाई आफ्नो कब्जामा राख्न विश्वमा धेरैले धेरै प्रयास गरेको उदाहरण प्रचूर मात्रामा पाइन्छ भने सबै प्रकारको सुख सुविधा एवं राज्यको सम्पूर्ण स्रोत आफ्नो मुट्ठीमा पार्ने र जनतालाई भोग्यबस्तुको रुपमा हेरिने प्रयत्न जहाँ पनि भएको पाइन्छ । तापनि त्यो क्षणिक रुपमा रहन्छ, परन्तुसम्म टिन्न सक्तैन । यसप्रकारका इतिहासको पाना अन्यत्र मात्र होइन नेपालमा पनि मनग्गे पाइन्छ भन्ने कुरा २००७ साल र २०४६ साल अघि फर्केमा ऐना जस्तै छर्लङ्ग हुन्छ । त्यतिबेला राज्यको सम्पूर्ण स्रोत, साधन एवं शक्ति कस–कसमा केन्द्रित थियो र जनताले कस्ता प्रकारको जीवन यापन गर्नुपऱ्यो भन्ने कुरा यहाँ उल्लेख गर्न परोइन । फलत: आजसम्म पनि त्यस इतिहासको भूतले आम नेपाली जनताले सान्है तल्लो श्रेणीको अथवा ७० प्रतिशतभन्दा बढी जनसंख्याले निरपेक्ष गरिवीको रेखामुनिको जीवन यापन गर्नु परेको छ । त्यतिबेलाको क्रुरताले कुन हदसम्म आफ्नो दानवताको पञ्जा फैलाएको थियो भन्ने सानो उदाहरण प्रस्तुत गर्ने सिलसिलामा यी पंक्ति कोरिएका छन् ।

कुरा हो १९९३ सालको । देशमा एक छत्र शासन व्यवस्थाले जनताले चूँ बोल्न त परै राखौं - धर्म, शिक्षा, सामाजिक सुधार एवं जनताको जीवन उठाउने कुनै पनि प्रयास गर्नु भनेको अपराध थियो । अथवा यसो भनौ जनहितको कुनै पनि कार्य गर्नु भनेको कालकोठरीको बास गर्नु वा मृत्युको मुखमा पस्नु हो भन्ने कुरा बुझ्नुपर्थ्यो । तर पनि त्यतिबेलाका ज्यूँदा, जल्दा बल्दा युवाहरुले मृत्युसँगको युद्धभूमिमा उत्रेको कुरा १९९७ सालको इतिहासको स्वर्णीम पाना पल्टाए सिद्ध हुन्छ ।

यसै क्रममा माथि उल्लेख भए झैं चेतनाको एउटा ज्योतिको रुपमा एकातिर राजनैतिक दलको स्थापना र क्रियाकलाप हुन थालेको हो भने शैक्षिक क्रान्तिको रुपमा शहीद चिनियाँलाल सिंहले एउटा नौलो अध्याय थपी आफूले शहादत प्राप्त गरेको इतिहास आज थोरै मानिसलाई सम्झना होला । धेरै



<u>खिउँलस्थित महावीरं इन्ष्टिच्यूट रहेको घर</u>

पुरानो भैसकेको छैन, कुरो हो आजभन्दा ५९ वर्ष अधिको नेपालको शैक्षिक इतिहासमा दरवार स्कूल, त्यो पनि राणा शासक तथा त्यसका आसे पासेहरुले मात्र पढ्न पढाउन स्कूल स्थापना गरिएको थियो । त्यसबाहेक स्कूलको नाममा अरु कुनै नभएको बेला काठमाण्डौको बाङ्गेमुढा निवासी चिनियाँलाल सिंहले आफ्नै घरमा "**महावीर इन्ष्टिच्यूट**" नामको एउटा निम्नमाध्यमिक विद्यालयको (कक्षा ७ सम्म) स्थापना गर्नुभयो । त्यस इन्ष्टिच्यूटमा तत्कालिन जागरुक युवाहरु जस्तै हेमबहादुर माली, टंक विलास, मधुसुदन देवकोटा, गंगालाल (शहीद), सूर्यबहादुर भारद्वाज, पु.वानेवा आदि शिक्षक हुनुहुन्थ्यो भने सो इन्ष्टिच्यूटमा कक्षाबाट उत्तीर्ण हुने अवधि ६।६ महिना राखिएको थियो ।

शैक्षिक, इतिहास केलाउने हो भने नेपालको पहिलो निजी क्षेत्रको विद्यालयमा **महावीर इन्ष्टिच्यूट** पर्छ भने यसका संस्थापक चिनियाँलाल सिंह निजी क्षेत्रका विद्यालय स्थापना गर्ने पहिलो व्यक्ति हुन् । तर दुर्भाग्यपूर्ण राज्य व्यवस्थाले त्यसलाई स्वीकृति दिएर फलाउने फुलाउने त कल्पनै नगरौं । १९९७ सालको दमनको क्रममा चिनियाँलाल सिंह पनि समातिनु भयो । अनि श्री सिंहलाई सर्वस्वहरणको साथै आजीवन कारावासको सजाय तोकियो । फलत: जेल जीवनमा बिषमज्वर (टाइफाइड) ले आक्रान्त हुनुभयो र उपचार बेगर २००१ सालमा शहादत प्राप्त गर्नुभयो ।

यसरी शैक्षिक जगतमा पहिलो कीर्तिमान स्थापना गर्ने व्यक्तिको कदरको नाममा प्रजातन्त्रत्तोत्तर शासन व्यवस्थाले त्यस्तो व्यक्तित्वको लागि केही गर्नु पर्छ भन्ने अहिलेसम्म सोच्न त परै रहोस् देशको शैक्षिक इतिहासको

पानालाई जीवित राख्न, नेपालको पहिलो निजी क्षेत्रका इन्ष्टिच्यूटलाई निरन्तरता दिई कसैले वास्ता गरेको पाइदैन । हुनत: देशका शहीदहरुलाई सम्मान गर्न र उनीहरुको देनलाई राज्यले सम्मान गरी भावी पिढीलाई देशको क्रान्तिकारी इतिहासबाट सदा सचेत तुल्याउने काम आजसम्म केही हुन सकेको मानिंदैन । तर यस दिशामा सोच्ने बेला कहिले भन्ने प्रश्न जिम्मेवार पदमा बसेकाहरु सामु उपस्थित छ ।

यसै सिलसिलामा अरु कुनै बिशेष कुरा होस् भन्ने आशा नराखिए तापनि देशमा हजारौ हजार निजी क्षेत्रका विद्यालयहरु स्थापना भै सञ्चालन भैरहेका छन् । तर त्यतिबेला अर्थात १९९३ सालमा स्थापना भएको "**महावीर इन्ष्टिच्यूट**" नामको अस्तित्व आज मेटिएको छ । त्यसको पुनर्स्थापना बारे एकातिर शहीदप्रति श्रद्धा राख्नेहरुबाट सोचिनुपर्ने हो भने अर्कोतर्फ शिक्षा मन्त्रालय भनूँ सरकारबाट त्यस्ता संस्थाप्रति श्रद्धा राखी इतिहास जीवित तुल्याउने काममा अग्रगामी पाइला चाल्नुपर्ने हो । हुनत: अघिल्ला सरकारहरुले देशका कुनै पनि जल्दाबल्दा समस्यालाई वास्ता नगरी आफ्नै दुनो सोभ्याउने काममा लागेको थियो भने त्यस्तो बेलामा कुनै आशा राख्नु मृग मरिचि कथा थियो । तर नेकपा (एमाले) सरकारले भावी सरकार देशभक्त र प्रजातन्त्र वादीको भन्ने नाराले सरकार गठन गर्न पुगेको छ । सोही अनुरुप वर्तमान सरकारले प्रजातान्त्रिक परिपाटी बसाल्न र निरंकुश शासन अन्त्य गर्न बलिदान भएका र इतिहास मोड्ने काममा योगदान पुऱ्याउने यस्तो पहिलो शैक्षिक संस्थाप्रति दायित्व निर्वाह गर्नेछ भन्ने आकांक्षा राख्नु नै पर्याप्त हुनेछ ।

यहाँनिर यो आशा राख्नु पनि उचित हुनेछ - त्यस्ता शहीदहरुको नाममा आफ्नो व्यक्तित्व आर्जन गर्न खोज्ने व्यक्तिहरुबाट पनि आफ्नो दायित्व निर्वाह हुनेछ । अन्यथा शहीदको शोषण गर्ने प्रयास भयो भन्ने आरोप सावित नहोला त ?

लेखिका शहीद चिनियाँलाल सिंहको एक मात्र जीवित सन्तान हुनुहुन्छ । उहाँ कृषि बिभाग अन्तर्गत केन्द्रीय प्रयोगशालामा खाद्य प्राविधिक रुपमा कार्यरत हुनुहुन्छ । उहाँले बेलायतबाट खाद्य प्रविधिमा स्नात्तकोत्तर गर्नु भएको छ ।

*(नेपाल जागरण, वर्ष ३ अंक १५, सोमबार १५ फागुन २०५१)*

# शहीद चिनियाँलाल सिंहया म्हसीका

कृष्ण महर्जन 'दु:खी'

बि.सं.१९०३ सालया कोतपर्व लिपा जंगबहादुर कुँवरया उदय जुया थापना जूगु राणा शासन सच्छि व प्यदँ तक न्ह्यागु खँ भ्की सकसियां सिउगु हे खँ ख: । थुगु शासनया इलय् नेपालय् शिक्षा, उद्योग, ब्यापार, कृषि व मेमेगु ख्यलय् राणा शासक त्येगु कुदृष्टि याना बिकास मजूगु ख: । छाय्धा:सा राणातय्सं जनतातय्त थगु खँय् ज्या याकेबिल धा:सा जनता शिक्षित व आर्थिक ख्यलय् बिकास जुया राणातय्गु बिरोध याइ धका: बञ्चित याना जनतातय्त दासीया रुपं कयात:गु ई ख: ।

थुगु हे इलय् भाजु उजिर सिंह कप्तानया काय् कुलदीप सिंह व भौ कान्छी नानीया कोखं भाजु चिनियाँलाल सिंहया जन्म बि.सं.१९६३ साल असार १७ गते थाय्मदु लिक्कसं खिंउलँ धइगु थासय् जूगु ख ।

वय्क:या इहिपा तुल्सीदेवी सिंह नापं जूगु ख:सा वय्क: पिनिगु कोखं काय्पिं मदनलोचन सिंह व योगेन्द्रबहादुर सिंह ख:सा छम्ह जक म्ह्याय् उषा सिंह ख: ।

भाजु चिनियाँलाल सिंह स्वीदँ दुगु इलय् नेपालय् न्ह्यानाच्वंगु राणा तय्गु क्रुर शासनया बिरोधय् नेपा:या जनतातय्त शिक्षाया माध्यमं जनचेतना बिइया निम्ति छगू ब्वनेकुथि चाय्के मा:गु वा:चाय्का बि.सं.१९९३ सालया शिवरात्री खुन्हु थ:गु छेँ बिल्दान, प्रतिष्ठित व पासापिनिगु उपस्थिति याका छगू भेला याना थ:गु हे छेँया चुकय् तयात:म्ह रामभक्त हनुमानया नापं "**महावीर इन्स्टिच्यूट** स्कूल" पलिस्था या:गु ख: । भेलाय् उपस्थित जुया दिइपिंमध्ये सभापतित्व कलाकार चन्द्रमान मास्के, पण्डित मूरलीधर, सुब्बा पूर्णनारायण प्रधान, बालकृष्ण श्रेष्ठ, टंक बिलास, कृष्णप्रसाद मानन्धर, इन्द्रप्रसाद श्रेष्ठ, पूर्णबहादुर मानव, हरिभक्त, हेमबहादुर माली, आनन्दराम श्रेष्ठ, कृष्णप्रसाद मानन्धर, मधुसुदन देवकोटा, पूर्णबहादुर नेवा:, शहीद गंगालाल श्रेष्ठ,

सूर्यबहादुर भारद्वाज, बुद्धिप्रसाद शर्मा, तिर्थराज सुवाल (प्रयागराज सुवालया अबु) व मेमेपिं नं उपस्थित दुगु खः ।

अथेहे प्रधानाध्यापकय् तिर्थराज सुवाल च्वना दिउगु खः, शिक्षकय् हेमबहादुर माली, आनन्दराम श्रेष्ठ, कृष्णप्रसाद मानन्धर, टंक बिलास, मधुसुदन देवकोटा, पूर्णबहादुर नेवाः, शहीद गंगालाल श्रेष्ठ, सूर्यबहादुर भारद्वाज, बुद्धिप्रसाद शर्मा व मेमेपिं च्वना दिउगु खः ।

भेलाय् वक्ता जुया दिइपिंनिगु नाँ काय्गु खःसा पण्डित मुरलीधर, सुब्बा पूर्णनारायण प्रधान व बालकृष्ण श्रेष्ठ पिं खः ।

अनलिं उगू स्कूलयात सरकारपाखें स्वीकृति काय्गु निम्ति नियम बिनियम नापं विधान तयार याना उवलय्या शिक्षा डाइरेक्टर मृगेन्द्र शम्सेर जबरायात निवेदन तःगु खः ।

निवेदनय् धयातःगु कथं खुलाय् छक्व तगिं थाहां वनिगु व्यवस्था याना तःगुलिं स्वीकृति नं मब्यूगु जुयाच्वन । अथे खुलाय् छक्वः तगिं थाहां वने माःगुया कारण छु धाःसा नेपाया जनतात शिक्षां वञ्चित याना यक्व हे लिउने लाःगुलिं व एस.एल.सी. तक ब्वनेत भिंदँ तक ब्वनेमाःगुलिं शिक्षा बिकासया निम्ति खुलाय् छक्व तगि थाहां वन धाःसा दच्छिया पाठ्यक्रम खुलाहे क्वचाय्के फई वा दच्छिया छगू तगिं पार याय्गु धैगु हे ई, श्रोत व युवावर्गया मनोवृत्ति अल्छि याकेगु जुइगुलिं याकनं शिक्षाय् बिकास याय्या अथे याय्माःगु खँ राणातय्त अन हे शंका वन, स्वीकृति मब्यूगु खः धका धयातःगु खनेदु । अथे हे प्रौढ शिक्षा नं बिइमाःगु खँ न्ह्यथनातःगु जुयाच्वन । थुगु खँय् विवाद जुजुं व स्कूल नं न्ह्याना च्वच्वं बि.सं.१९९७ सालं चिनियाँलाल सिंहयात ज्वना यंका सर्वश्व सहित आजीवन जेलय् कुना बील । खला वय्कलं थः जेलय् लाइगु निश्चित जुइवं अनुभव याय्या निम्ति न्ह्वःनिसे सुकुलि च्वनेगु व धेवा निगःया मुस्या नयेगु याःगु खः । जेलय् कुना तःगु इलय् अमानवीय रुपं शारीरिक यातना बिउगुलिं उसाय् मदुसा नं जेलं मत्वःतूगुलिं ताइफाइड जुया तःच्व

जुइवं पिने यंका वास: याकेत स्वीकृति विउगु इलय् अन्तिम अवस्थाय् यंकेगु जुइमखु धका: छैंया परिवार व पासा भाइपिन्सं धा:गुलिं घाटय् यंकूगु ख: ।

घाटय् यंका स्वघौ प्यघौ लिपा स्वीच्यादँय् छैंया सकल ज: व पासा भाइपिं त्व:ता बि.सं.२००१ साल असार २६ गते खुन्हु दिवंगत शहीद जुया दिइगु ख: ।

अथे हे वय्क:या लजगा: कथं काय्गु हे ख:सा फोटोग्राफी धका: धाई । वय्क:यात उबलय्या छम्ह दुरदर्शी चिन्तक व विचारक "थिंक त्यांक" धका: धाय्गु नं या: ।

शहीद चिनियाँलालं ह्वला थकूगु पुसा बांलाक मां जुया बुया वय् फयाच्वंगु मदु । उगु इलय् राणाशासन जूगुलिं जनताया मस्तय्त आख: ब्वंकेगु धइगु हे थ:गु तुति थ:म्हं हे पाँ पालेगु थें ख: । अथेजूसां तवि वय्कलं थापना या:गु **महावीर इन्ष्टिच्यूट** स्कूल बाँलाक्क न्ह्याके मफयाच्वंगु इलय् जेलय् लाम्ह व्यक्तिं नेपालय् जुयाच्वंगु शैक्षिक विकृतिप्रति सुधारया आवश्यक जूगु खँ न्ह्यथना दिइगु खँ याना हे वय्क:यात छम्ह दूरदर्शी चिन्तक व बिचारक "थिंक त्यांक" धा:गु जुइमा: ।

वय्क: मदय् धुंका भिnदँ लिपा अथवा नेपालय् प्रजातन्त्र वय्धुंका तिनी वय्क:या सम्पत्ति २०११ साल लित बील ।

दँय् छक्व (माघ १६ गते) छनु जक शहीद दिवसया नामं स्वाँ छाय्गु छगू मिनेट मौन धारण याय्गु व भाषण विवं शहीद तय्गु इच्छा पूवंनि मखूगु खँय् भीसं बिचा: याय्मा: । अभ धाय्गु हे ख:सा शहीद दिवसया इलय् मेपिं शहीद तय्गु किपा जक तया वय्क:या किपा मतय्गु धइगु हे दु:खया खँ ख: ।

*(ई लोहँ, दा ३, ल्या: ३, २०५९ जेठ)*



# महावीर इन्ष्टिच्यूट पुन: सञ्चालन गर्न आवश्यक

शिक्षा शहीद चिनियाँलाल सिंहले शैक्षिक चेतना बिना निरकुश राणा शासनको अन्त्य हुन नसक्ने वास्तविकतालाई बुझी वि.स.१९९३ सालमा स्थापना गर्नुभएको **महावीर इन्ष्टिच्यूट**लाई पुन: सञ्चालन गर्नुपर्ने सम्बन्धित विज्ञहरुले राय व्यक्त गरेका छन् ।

**महावीर इन्ष्टिच्यूट** स्थापना गरेकै कारण १९९७ सालमा राणा शासकबाट आजन्म कारावास र सर्वस्वहरणको सजायँ पाएका शहीद चिनियाँलाल सिंहको सपना साकार पर्न सो इन्ष्टिच्यूटलाई पुन: सञ्चालन गर्नुपर्ने कुरामा उनीहरुले जोड दिएका छन् ।

**महावीर इन्ष्टिच्यूट**द्वारा आयोजित नेपालका प्रथम शिक्षा शहीद चिनियाँलाल सिंहको ९६ औ जन्मजयन्ती तथा १९९३ सालमा स्थापित **महावीर इन्ष्टिच्यूट**को स्थापना दिवस समारोहका सहभागी वक्ताहरुले सो विचार व्यक्त गरेका हुन् ।

समारोहमा काठमाण्डौ महानगरपालिकाका प्रमुख केशव स्थापितले अरुको सहयोगबाट मात्रै देश नबन्ने भएकाले नेपालीहरु आफैं त्यसतर्फ क्रियाशील हुन आग्रह गर्नुभयो । उहाँ जनता एकजुट भएमा मुलुकको बिकास सम्भव हुने भएकाले जनताहरु नै एकमत भएर अगाडि बढ्नुपर्ने बताउनुभयो ।

सरकार पार्टी र आफ्नो स्वार्थबाट मुक्त भएमा हामी पनि अरु राष्ट्रसँग प्रतिस्पर्धी बन्न सक्ने छौ भन्दै स्थापितले राष्ट्रलाई न्यायशील बनाउनुपर्ने कुरामा पनि जोड दिनुभयो । स्थापितले **महावीर इन्ष्टिच्यूट**लाई हाल स्कूलको रुप दिन नसके पनि कुनै तालिम सञ्चालन गर्ने इन्ष्टिच्यूटमा परिणत गर्न सकेमा उपयुक्त हुने विचार व्यक्त गर्नुभयो ।

नेपाल परिषद्का अध्यक्ष तथा कार्यक्रमका सभापति रामहरि शर्माले शिक्षा बिना राजनीतिक परिवर्तन हुन नसक्ने भएकाले जनताको सहयोगबाट

पुनः **महावीर इन्ष्टिच्यूट**लाई निरन्तरता दिइने बताउनुभयो । उहाँले शिक्षालाई अगाडि बढाउने उद्देश्यले सर्वप्रथम जनताको स्कूल निर्माण गर्ने श्रेय चिनियाँलालको भएकोले उहाँको योगदानलाई जीवितै राख्न **महावीर इन्ष्टिच्यूट**को पुनर्स्थापना जरुरी रहेको बिचार व्यक्त गर्नुभयो ।

**महावीर इन्ष्टिच्यूट**का उपाध्यक्ष प्रकाशधर शर्माले शहीद चिनियाँलालको जीवनी माथि प्रकाश पार्नुभएको थियो । बि.सं. १९६३ सालमा जन्मिनु भएका चिनियाँलालले राणा शासनकालमा १९९७ सालमा सो इन्ष्टिच्यूट खोलेको अभियोगमा आजन्म कैद र सर्वस्वहरणको सजाय पाउनु भएको थियो । धनलाई भन्दा शिक्षालाई बिशेष जोड दिने चिनियाँलालले जेल जीवनमा अनेक यातना पाई मृत्युवरण गर्नुभएको थियो ।

त्यसबेला शहीद गंगालाल श्रेष्ठ, धर्मभक्त माथेमा, टंकप्रसाद आचार्यजस्ता अध्यापक रहनुभएको सो इन्ष्टिच्यूटमा नेपाल कम्प्यूनिष्ट पार्टीका संस्थापक नेता पुष्पलाल श्रेष्ठ, बौद्ध विद्वान तथा बामपन्थी नेता प्रा.माणिक लाल श्रेष्ठ, प्रयागराज जोशी, ईश्वरीमान श्रेष्ठ जस्ता हस्तीहरुले अध्ययन गरेका थिए ।

समारोहमा शहीदपुत्री तथा केन्द्रका सचिव, कोषाध्यक्ष उषा सिंहले पनि इन्ष्टिच्यूटका लागि आफूले घर उपलब्ध गराउने र अन्य सहयोग सरकारबाट पाउने अपेक्षा राखेको बताउनुभएको थियो ।

*(हिमालय टाईम्स, २०५९।३।१९।४)*



# चिनियाँ दाइ विमोचित

नेपालका प्रथम शिक्षा शहीद चिनियाँलाल सिंहको ९६ औ जन्मजयन्ती तथा १९९३ सालमा स्थापित **महावीर इन्स्टिच्यूट** स्थापना दिवसको हिजो एक समारोहको आयोजना गरी मनाइयो ।

उक्त समारोहमा युग कवि सिद्धिचरण श्रेष्ठद्वारा लिखित शैक्षिक क्रान्तिका अग्रदूत चिनियाँ दाइ पुस्तिकाको विमोचन काठमाडौ महानगर–पालिकाका मेयर केशव स्थापितले गर्नुभयो । **महावीर इन्स्टिच्यूट** गुथि (केन्द्र)को आयोजनामा आयोजित उक्त कार्यक्रममा मेयर स्थापितले **महावीर इन्स्टिच्यूट** रहेको घर स्कूल सञ्चालनको लागि अनुपयुक्त रहेको हुँदा अन्य ठाउँको जग्गा लिई विद्यालय सञ्चालन गर्ने सोच बनाएको बताउनुभयो । अशंबण्डामा परेको १ आना जग्गामा बनेको पुरानो घरलाई ४० लाख भनेपछि बार्गेनिङ चलिरहेको उल्लेख गर्दै मेयर स्थापितले हरेक नेताहरुले षड्यन्त्र गर्न छोडी आफू जितेर आएको ठाउँको विकास गरुन् म मेरो काठमाडौका हरेक पक्षको विकासमा प्रतिबद्ध छु भन्नुभयो ।

नेपाल प्रजापरिषद तथा **महावीर इन्स्टिच्यूट**का अध्यक्ष रामहरि शर्माको सभापतित्वमा सञ्चालित उक्त सभामा शहीदकी पुत्री तथा गुठीका सचिव उषा सिंहले आफ्ना पिता शहीद चिनियाँलाल सिंहबाट सधै छोराछोरीको भविष्य बनाउने हो भने शिक्षा दिनुपर्छ भन्ने गर्नुहुन्थ्यो भनी स्मरण गराउनु भएको थियो । पिताको मृत्युपछि एक मुट्ठी चिउरा र एउटा अम्बाको भरमा कैयौ दिन बिताएको स्मरणमा आँसु झार्दै शहीद पुत्री सिंहले शिक्षाको लागि आफ्नो घर दान गर्ने शहीदको मूल्यांकन नभएकोम दुःख व्यक्त गर्नुभयो ।

**महावीर इन्स्टिच्यूट**का पूर्व विद्यार्थी नेपालनन्दन सिंह र पूर्वमन्त्री सूर्यबहादुर भारद्वाजले समेत **महावीर इन्स्टिच्यूट** पुनर्स्थापना हुनुपर्ने कुरामा जोड दिइएको उक्त सभामा गुथिका उपाध्यक्ष प्रकाशधर शर्माले ऐतिहासिक शिक्षास्थललाई पैसामा होइन पुरातात्विक सम्पदाको रुपमा मूल्यांकन गर्नु पर्ने कुरामा जोड दिनुभयो । गुथिका सदस्य दुर्गाबहादुर श्रेष्ठ क्षेत्रीले **महावीर**

**इन्ष्टिच्यूट** पुनस्थापित हुनुपर्छ भन्ने माग राख्दै शहीद पत्नी तुल्सीदेवी सिंह र छोरी उषा सिंहले आफ्नो जीवन अर्पण गरिसक्दाको अवस्थामा पनि राज्यले मूल्यांकन नगर्नु खेदपूर्ण कुरा हो भन्नुभयो ।

*(महानगर २०५९।३।१८)*



## महावीर इन्ष्टिच्यूटको स्थापना दिवस सम्पन्न

नेपालको पहिलो नीजी विद्यालय **महावीर इन्ष्टिच्यूट**को ६६ औं स्थापना दिवस तथा विद्यालयका संस्थापक शहीद चिनियाँलाल सिंहको ९६ औं जन्म जयन्ती हिजो यहाँ एक समारोहको आयोजना गरी मनाइयो ।

खिउल बाङ्गेमुडास्थित आफ्नै घरमा वि.स.१९९३ मा चिनियाँलाल सिंहले उक्त इन्ष्टिच्यूट स्थापना गरेका कारण आजीवन कारावास तथा सर्वश्वहरणको सजाय पाएका थिए ।

समारोहमा काठमाडौं महानगरपालिकाका प्रमुख केशव स्थापितले शहीदहरुले झै सबैले इमान्दार र लगनशील भएर काम गरेका काठमाडौंलाई नमूना शहरका रुपमा विकसित गर्न सकिने बताउनुभयो । उहाँले युगकवि सिद्धिचरण श्रेष्ठद्वारा लिखित **"शैक्षिक क्रान्तिका अग्रदूत चिनियाँ दाइ"** नामक पुस्तकको विमोचन पनि गर्नुभयो ।

जीवित शहीद रामहरि शर्माको सभापतित्वमा सम्पन्न उक्त समारोहमा **महावीर इन्ष्टिच्यूट** केन्द्रका सचिव उषा सिंहले सर्वसाधारणले पढ्न पाउने पहिलो नीजी विद्यालयका रुपमा सञ्चालित **महावीर इन्ष्टिच्यूट** केही समयदेखि बन्द रहेर फेरि सञ्चालनको प्रक्रियामा रहेकाले आवश्यक सहयोग गर्न सम्पूर्ण संघ संस्थालाई आग्रह गर्नुभयो ।

*राष्ट्रिय समाचार समिति, गोरखापत्र २०५९।३।१९।४*

# शिक्षा शहीदले खोलेको विद्यालय पुनर्जीवित गर्न माग

नेपालका प्रथम शिक्षा शहीदका रुपमा चिनिएका चिनियाँलाल सिंहद्वारा ६६ वर्ष अघि स्थापना गरिएको **महावीर इन्ष्टिच्यूट** नाउँको पब्लिक स्कूललाई पुनजागृत गर्न स्वतन्त्रता संग्रामीहरुले माग गरेका छन् ।

शिक्षाबिना राजनीतिक उपलब्धि हासिल गर्न सम्भव नभएकाले उक्त इन्ष्टिच्यूट स्थापना गरिएको थियो, सिंहको ९६ औ जयन्ती तथा इन्ष्टिच्यूटको स्थापना दिवसका अवसरमा सोमबार आयोजित समारोहमा नेपाल प्रजापरिषद का अध्यक्ष रामहरि शर्माले भन्नुभयो "परिषद्सँगै स्थापना भएको इन्ष्टिच्यूट–लाई महानगरपालिका, सरकार र जनताको चासो आवश्यक छ" ।

उक्त विद्यालयले राजनीतिक जनचेतनाको लहर ल्याएको बताउदै उक्त शैक्षिक संस्थालाई पुनर्जीवन दिने माग शहीद सिंहकी छोरी उषा सिंहले सरकारसँग गरिरहनु भएको छ । विद्यालय पुनर्स्थापनाका लागि समारोहमा सर्वसाधारणका नाउँमा एक आह्वान पत्र समेत जारी गरियो ।

कम्यूनिष्ट पार्टीका संस्थापक नेता स्वर्गीय पुष्पलाल श्रेष्ठ, प्रयागराज जोशी, ईश्वरीमान श्रेष्ठ जस्ता व्यक्तिहरुले अध्ययन गरेको उक्त विद्यालयमा शहीद गंगालाल श्रेष्ठ, धर्मभक्त माथेमा, टंकप्रसाद आचार्य, आनन्दराम श्रेष्ठ, चन्द्रप्रसाद प्रधान, टंक विलास र पूर्णबहादुर एम.ए. लगायतले पढाएका थिए । समारोहमा मेयर केशव स्थापितले युगकवि सिद्धिचरण श्रेष्ठद्वारा लिखित र शहीद पुत्री उषा सिंहद्वारा सम्पादित शैक्षिक क्रान्तिका अग्रदूत चिनियाँ दाई नामक पुस्तकको विमोचन गर्नुभएको थियो ।

*कान्तिपुर २०५९।३।१८*



# शिक्षाको माध्यमबाट क्रान्ति गर्ने चिनियाँलाल

जितेन्द्र शाह

नेपालका प्रथम शिक्षा शहीदको रुपमा चिनिएका "**शैक्षिक क्रान्तिका अग्रदूत चिनियाँ दाई**"को सम्झना गर्दा राजधानीको ठँहिटीस्थित सिघःलमा स्वतन्त्रता संग्रामीहरुले गहभरि आशुँ पोख्छन् र भन्छन् "उनले ज्यानको पर्वाह नगरी शैक्षिक क्रान्तिका लागि खोलेको पब्लिक स्कूल पनि इतिहासको पानामा सीमित भइरहेको छ । निरन्तर प्रयासको बाबजुद उनको सपनालाई पुनर्जागृत गर्न सकिएको छैन ।

स्वर्गीय चिनियाँलाल सिंहले ६६ वर्षअघि अशिक्षित जनतालाई भजन मण्डली बनाएर दासको रुपमा शोषण गर्ने जहानियाँ राणा शासन विरुद्ध वि.स.१९९३ साल महाशिवरात्रिको दिन काठमाडौको बाङ्गेमुढा खिउँलस्थित आफ्नै घरमा **महावीर इन्स्टिच्यूट** नाउँको पब्लिक स्कूलको स्थापना गर्नुभएको थियो । त्यही पब्लिक स्कूललाई पुनर्जागृत गर्नुपर्ने माग सरकार समक्ष २००७ सालदेखि नै स्वतन्त्रता संग्रामीहरुद्वारा गरिदै आएको छ ।

नेपाल कम्युनिष्ट पार्टीका संस्थापक नेता पुष्पलाल श्रेष्ठ, बौद्ध विद्धान तथा वामपन्थी नेता प्रा.मणिकलाल श्रेष्ठ, प्रयागराज जोशी, ईश्वरीमान श्रेष्ठ, प्रभुनरसिंह राणा जानकीप्रसाद प्रधान र जीवनलाल सत्यालजस्ता राष्ट्रिय हस्तीहरुले त्यहाँ अध्ययन गरेका थिए । इन्स्टिच्यूटमा शहीद गंगालाल श्रेष्ठ, धर्मभक्त माथेमा, टंकप्रसाद आचार्य, आनन्दराम श्रेष्ठ, चन्द्रप्रसाद प्रधान, टंक विलास र पूर्ण बहादुर एम.ए.लगायतका प्रजातन्त्रका लागि संघर्षरत योद्धाहरुले पढाएका थिए ।

सिंहको विद्यालय खोल्ने प्रयास त्यतिखेर भएको थियो । जब द्वितीय विश्वयुद्ध पश्चात् उर्लिएको राष्ट्रिय चेतनाका लहरहरु एसिया हुँदै नेपाल भित्रिदै थिए, त्यतिबेला व्रिटिस साम्राज्यवादका समर्थक जहानियाँ राणा शासन विरुद्व देशभित्र क्रान्तिको सुरुवात भइसकेको थियो । सरकार विरुद्व बोल्न त के जनताद्वारा जनताका लागि शिक्षा दिनु विकास र चेतनामूलक कार्यक्रम सञ्चालन गर्नु भनेको मृत्युलाई बरण गरे समान मानिन्थ्यो ।

तर, शहीद चिनियाँलाल सिंहले शैक्षिक चेतनाबिना एकतन्त्रीय जहाँनिया राणा शासनको अन्याय, अत्याचार र शोषणलाई बुझ्न नसक्ने वास्तविकतासँग साक्षात्कार हुनुहुन्थ्यो । शिक्षाको ज्योति जगाएर निरंकुशता विरुद्ध संखघोष गर्ने जनसेना तयार गर्नु नै उनको लक्ष्य थियो । जनता शिक्षित भएमा एकतन्त्रीय शासन व्यवस्था नरहने अवस्थासँग परिचित राणा शासकहरु लक्षित जनशक्तिलाई दबाउन, हत्या गर्न समेत पछि परेका थिएनन् । त्यसको शिकार स्वयं सिंह पनि भए, जुन सत्यतासँग उनी पहिलेदेखि नै परिचित थिए ।

ऐतिहासिक पब्लिक विद्यालयको रुपमा रहेको इन्ष्टिच्यूटबिना सरकारी इजाजत स्थापना गरेका कारण वि.स.१९९७ सालमा राणा शासकबाट सिंहलाई आजन्म कारावास र सर्वश्वहरणको सजाय पाएका थिए । जेलभित्रै ज्वरोले ग्रस्त हुन पुगेका सिंहको उचित उपचारको अभावमा देहान्त भएको थियो । भाजु कुलदीप सिंह र देवलानी सिंहका कान्छा छोरा शहीद सिंहको जन्म वि.स.१९६३ सालमा भएको थियो ।

वि.स. २०२१ सालमा टंकप्रसाद आचार्य गृहमन्त्री हुँदा शहीद सिंहको सर्वश्वहरण फिर्ता गरिए तापनि उहाँले छोडेर जानु भएको नेपाली इतिहासको प्रथम पब्लिक स्कूल अझै पुनर्स्थापित हुनसकेको छैन । सिंहका परिवारजन र सहकर्मीद्वारा उक्त अभियानलाई निरन्तरता दिने संघर्ष भने जारी छ ।

त्यतिखेर दुईटा समूह थियो । एउटा समूह नेपाल प्रजा परिषद्ले राजनीतिक क्रान्तिको अभिभारा लिएको थियो भने सिंहले शैक्षिक क्रान्ति ल्याउने अभिभारा बोक्नु भएको थियो । सिंहको ९६ औ जयन्तीको अवसरमा नेपाल प्रजापरिषद्का अध्यक्ष रामहरि शर्माले भन्नुभयो इन्ष्टिच्यूटलाई जागृत गर्न सरकार र जनता दुवैको प्रयासको खाँचो छ ।

नेपालमा नयाँ राजनीतिक जनचेतनाको लहर ल्याउन सफल उक्त शैक्षिक संस्थालाई पुनर्जीवन दिने अभियानमा प्रजातन्त्रको पुनर्स्थापनापछि शहीद सिंहकी छोरी उषा सिंह क्रियाशील भएर लाग्नु भएको छ भने २००७ सालको क्रान्तिसँगै शहीद सिंहकी धर्मपत्नी स्वर्गीय तुल्सीदेवी सिंहले त्यसको पुनर्स्थापनाका लागि सरकारसँग निकै अनुनय विनय गर्नुभएको थियो । शहीद

र उसको सपना भनेको सारा देशवासीहरुको साझा दायित्व र जिम्मेवारीभित्र पर्दछ । यो प्रजातन्त्र हो भने शहीदले छोडेर गएका आदर्श र मार्गनिर्देशनलाई कार्यरुपमा लानुपर्ने जिम्मेवारी राज्यले लिनुपर्छ, शहीद पुत्री उषा सिंहको धारणा छ ।

राणा शासनको जगलाई उखेल्न सफल उक्त इन्ष्टिच्यूट शिक्षित ज्वारभाटाहरु उतार्न सफल शिक्षा केन्द्र हो, ७६ वर्षीय स्वतन्त्रता संग्रामी भाइरत्न बज्राचार्यले भन्नुभयो । उहाँका अनुसार प्रजा परिषद्को राजनीतिक गतिविधिलाई बढावा दिन स्थापित इन्ष्टिच्यूटको स्थापना शहीद सिंहले गोप्य तरिकाले आफ्ना घरका कोठाहरुमा गर्नुभएको थियो, सिहले पिउन र शिक्षक दुवैको भूमिका निभाउनु भएको थियो ।

उक्त ठाउँमा अन्तर्राष्ट्रिय पत्रिका जम्मा हुने र राजनीतिक बहस पनि हुने गरेको थियो । अस्वस्थताको बाबजुद मञ्चमा उपस्थित ८३ बर्षीय सूर्यबहादुर भारद्वाजतर्फ संकेत गर्दै बज्राचार्यले भन्नुभयो, "भोटाहिटीको कैलाशको पुस्तक पसल र भक्तबहादुर बुक सेलरमार्फत् पत्रिका मगाउने र वितरण गर्ने कार्यको संयोजन त्यही सूर्यले गर्थ्यो । वर्षको एकपल्ट शहीद स्मारकमा माला पहिर्‍याईदिनु नभई उनीहरुले छोडेर गएका आदर्शलाई कार्यान्वयन गरी देश र जनताका सामु प्रजातन्त्ररुपी स्वाद चखाउनु हो ।" शहीद सिंहका सहकर्मी ८३ वर्षीय सूर्यबहादुर भारद्वाजले भन्नुभयो ।

बुबाले पानी र एक छाक भोजनको भरमा परिवारलाई छोडेर देशका लागि लड्नुभयो, उहाँको त्यो नासोलाई मर्न दिदैनौ शहीद पिताका बहुमूल्य स्मृतिहरुलाई सम्झदै गहभरि आँशुसहित उषाले भन्नुभयो, मैले आफ्नो भागमा परेको घर उक्त इन्ष्टिच्यूटलाई प्रदान गर्छु भन्ने प्रतिवद्धता सरकारसामु व्यक्त गरे पनि शहीदको सपना अधुरै छ ।

नेपाल प्रजापरिषद्का अध्यक्ष रामहरि शर्माको अध्यक्षतामा **महावीर इन्ष्टिच्यूट** गुठी काठमाण्डौ प्रशासन कार्यालयमा दर्ता गराई सकिएको छ । त्यसको उद्देश्य शिक्षाको माध्यमबाट देशमा पुनर्जागृत हुँदै आइरहेको विसंगति

विकृतिविरुद्ध व्यवहारिक जनचेतना दिनुहुनेछ । इन्स्टिच्यूटका वर्तमान उपाध्यक्ष प्रकाशधर शर्माले बताउनुभयो ।

"इन्स्टिच्यूट रहेको जग्गाको क्षेत्रफल कम रहेको त्यो ठाउँमा शहीद सिंहको नाउँमा शिल्पकला केन्द्र खोल्दा ठीक होला" महानगरपालिकाका मेयर केशव स्थापितले भन्नुभयो । "अन्य ठाउँमा अलि बढी जग्गा लिएर विस्तृत इन्स्टिच्यूट खोल्न सकिन्छ, सम्बन्धित पक्षबाट सुझाव र प्रस्ताव मागिएको छ ।"

*कान्तिपुर २०५९।३।१९।४*



## सिद्धिचरणं च्वयादीगु " चिनियाँ दाइ" सफू विमोचन

यें महानगरपालिकाया मेयर केशव स्थापितं म्हिगः **महावीर इन्स्टिच्यूटया** ग्वसालय् थनया श्रीघः विहारया प्रभात माविइ ग्वसाः ग्वःगु **महावीर इन्स्टिच्यूटया** स्थापना दिवस व नेपाःया न्हापांम्ह शिक्षा शहीद चिनियाँलाल सिंहया ९६ क्वःगु बुदिंया भ्वलय् जूगु ज्याभ्वलय् 'चिनियाँ दाइ' नांया जीवनी सफू विमोचन यानादिल ।

कविवर सिद्धिचरण श्रेष्ठं च्वयादीगु उगु सफू विमोचन समारोहय् मू पाहाँ केशव स्थापितं यें मनपां यायेमाःगु अझ यक्व ज्या दनि, छुं छुं यायेधुनागु खँ कनादिसें यें देयात संसारया गुगुं नं शहर नापं प्रतिस्पर्धी दयेकेफइगु खँ कनादिल ।

म्वाःम्ह शहीद कथं म्हस्यूम्ह नेपाल प्रज्ञा प्रतिष्ठानया अध्यक्ष रामहरि शर्मा मिस्तय्सं समाजयात न्ह्यज्याकेत तःधंगु योगदान याना वयाच्वंगु खँ कनादिसें शिक्षा उन्नतिया लागिं **महावीर इन्स्टिच्यूटं** याःगु सत्प्रयास गवलें सितिं वनीमखु धयादिल । ज्याभ्वलय् शहीद चिनियाँ लाल सिंहया म्ह्याय् व **महावीर इन्स्टिच्यूटया** सचिव व कोषध्यक्ष उषा सिंहजु थः अबुजुया लुमन्तिइ नुगःखँ तयादीगु खः ।

*नेवा पोष्ट २०५९।३।१८।३*

# आधुनिक शिक्षाका अग्रदूत शहीद चिनियाँलाल

शोभा न्यौपाने

हरेक वर्ष माघ १६ गते आउँछ तर '९७ साल आउँदैन, क्रान्तिका अग्रदूत चिनियाँलाल सिंह जस्ता शहीदहरु पनि आउँदैनन् । शहीदगेटका प्रतिमामा माला पहिऱ्याउनु र औपचारिक कार्यक्रममा एक मिनेट मौन धारण गर्नु शहीदहरु प्रतिको सम्पूर्ण श्रद्धा ठानिन्छ । उनीहरुको सपना के थियो र कसरी पूरा गर्ने भन्ने कुरा त नजाने ठाउँ । त्यसैले त चिनियाँलालको पहिचानलाई पनि '**महावीर इन्ष्टिच्यूट**' का संस्थापकको संज्ञामा कैद गरिएको छ । उनी त्यति बेलाका दूरदर्शी चिन्तक र विचार 'थिंक ट्यांक' नै थिए भन्ने कुरा धेरैलाई थाहा नहुन सक्छ । त्यसैले त उनले सर्वोच्च नेता गणेशमान सिंहलाई जेलबाट भाग्न मद्दत पुऱ्याएको कुराको चर्चा होला बरु, तर उनको प्रभावकारी शिक्षा नीति र चिन्तनका विषयमा चासो राख्नेहरु कोही भएनन् । सर्वश्वहरण सहित आजीवन कारावास पाएका चिनियाँलाल सिंह टाइफाइटको उपचार नपाएर सहादत प्राप्त गरेकैले मात्र शहीद भनेर चिनिएका होइनन् । निरंकुश शोषकको बर्बरताका कारण मृत्यु प्राप्त हुँदैमा मात्र कोही शहीद हुन सक्दैनन् । भूपिले भनेजस्तै "शहीदहरु प्रत्येक नागरिकको धड्कनमा बाँचिरहेका हुन्छन्, ज्यानमा जीवन भरिरहेका हुन्छन्" । भूपिले नै भनेका छन् –"बन्दैन बोट कसैले बिउ छरेर नगए" । तर, अफसोच ! चिनियाँलाल सिंहले छरेको बिउ राम्ररी मौलाउने वातावरण अझै मिलेन । उतिबेला त राणा शासन थियो, जनताका सन्तानलाई शिक्षां दिनु आफ्नै खुट्टामा बञ्चरो हान्नु सरह ठानिन्थ्यो । तर पनि भयङ्कर चुनौतीका रुपमा '**महावीर इन्ष्टिच्यूट**' को स्थापना गरियो । उनको सोचाईले मूर्तरुप लिन नपाउँदै जेल चलाउन भएछ । परिस्थिति फेरिएको छ तर पनि हाम्रो शैक्षिक जगत अझ निष्क्रिय र दिशाहीन बन्दैछ । उनले त उतिबेला नै शैक्षिक विकृतिप्रति सुधारको खाँचो औंल्याएका थिए । राम्रोसँग पढाई गऱ्यो भने एक वर्षको पाठ्यक्रम छ महिनामा सकिन्छ र एउटा कक्षा पार गर्न पूरा एक वर्ष लगाउनु भनेको समय स्रोतको खति हो । युवावर्गको मनोवृत्तिमा अल्छिपन थप्नु हो । यही कुरा मनन् गरेर **महावीर इन्ष्टिच्यूट** खोलिएको थियो । तर तत्कालिन शिक्षा डाइरेक्टर मृगेन्द्र सम्शेर जबराले ५/६ महिनामा कक्षा चढाउने नियमले नमिलेकाले इन्ष्टिच्यूटको

स्वीकृति गर्न र सरकारी सहायता दिन नसकिने जिकिर गरे । चिनियाँलालको बिचार थियो–नेपालमा धेरै केटाकेटीले पढ्न पाएका छैनन् । उमेर ढल्केकालाई पनि शिक्षाको अवसर दिइनुपर्छ । एसएलसी परीक्षा दिनका लागि १ वर्ष लगाएर आम जनताका बालबच्चाले शिक्षा हासिल गर्न गाह्रो पर्छ । तर, उनले जति नै सम्झाए पनि परीक्षाको समयावधिको विवादको अड्को थापी त्यस इन्ष्टिच्यूटलाई छ महिने शैक्षिक सत्रको मान्यता दिइएन । अहिले त चिनियाँ–लाल छैनन्, उनका बारेमा स्मृति ग्रन्थ कोर्ने सिद्धिचरण श्रेष्ठ पनि छैनन् । तर सिद्धिचरणले कोरेका स्मृति ग्रन्थको पाण्डुलिपि फेला परिसकेको छ र शहीद चिनियाँलालकी एक मात्र जीवित सन्तान उषा सिंह यो किताबको प्रकाशन गर्ने सुरसारमा छिन् ।

एकदिन पुराना कागजात खोजमेल गर्दा **महावीर इन्ष्टिच्यूट**को लाइब्रेरीमा एउटा झुत्रो कापी फेला परेको बताउँदै उषा थप्छिन्–"कापीको शीर्षभागमा स्वर्गीय युगकवि सिद्धिचरण श्रेष्ठको नाम अंकित हुँदा अझ चासो र उत्सुकता बढ्यो । अनि सरसरी वाचन गर्दै जाँदा श्रेद्धय पिता चिनियाँलाल सिंहको सम्झना पुस्तिका लेखिएको रहेछ" ।

१९९० सालको महाभूकम्पपछि पीडितोद्धार संस्थामा कारिन्दाका रुपमा काम गर्दा आफ्नो परिचय भूकम्प पिडित चिनियाँलालसँग भएको उल्लेख गर्दै सिद्धिचरणले यस पुस्तिकामा उनका बारेमा ओझेल परेका थुप्रै पक्षहरु उजागर गरेका छन् । मृत्युको दिन २००१ साल माघ १६ गतेसम्म पनि जेलमा सँगै बसेका श्रेष्ठले त्यहाँ उनले प्रस्तुत गरेका दूरदर्शी कार्य र योजनालगायत उनको दुःखदायी मृत्युको चर्चा गरेका छन् । यसै पुस्तिकाबाट थाहा हुन्छ उनी महान् चिन्तक थिए । एक ठाउँमा उनको व्यक्तित्वको चर्चा गर्दै युगकवि श्रेष्ठले लेखेका छन् – 'चिनियाँदाइले जेल जानुपर्ने अवश्यंभावितालाई दृष्टिगत गरी सुकुलमा सुत्ने र दुई पैसाको भटमास खाएर छाक टार्ने अभ्यास घरैबाट शुरु गर्नुभएको थियो ।'

१९९३ सालमा **महावीर इन्ष्टिच्यूट**को स्थापनाको अवसरलाई स्मरण गर्दै लेखिएको छ–उक्त इन्ष्टिच्यूट स्थापना गर्न एउटा बैठक आयोजना गरियो । नेपालको इतिहासमा यसरी जनताले खुल्ला रुपमा सार्वजनिक बैठक गरिएको शायद त्यो नै पहिलो पटक हो । यसरी शिवरात्रिका दिनमा विधिवत्

स्थापना भएपछि नियमित रुपमा विद्यालय सञ्चालन हुन थाल्यो । निजी क्षेत्रको पहलमा पहिलो पटक जनताका लागि स्कूल खोलियो । पछि मास्टर तीर्थराज सुवालको योजना अनुरुप जुद्धसडकमा जुद्धोदय हाई स्कूलको स्थापना गरियो । आज जति पनि प्राइभेट स्कूलहरु गाउँ, सहर र टोलटोलमा छरिएका छन्, तीनको उद्‌गम **महावीर इन्ष्टिच्यूट** नै हो भन्दा अत्युक्ति नहोला । यसबाट लाखौं विद्यार्थी लाभान्वित छन् । तर उनको उद्देश्य अझै प्राप्ति भएको छैन । शैक्षिक बेरोजगार जन्माउने मेशिन बनेको शैक्षिक नीति उनले सोचेजस्तै उपलब्धी विहिन भएको छ । शैक्षिक विकृतिको जुन त्रास उनलाई ७० वर्ष अगाडि थियो, आजको समाज त्यसैबाट ग्रस्त छ । त्यसैले शैक्षिक र राजनीतिक इतिहाससँग वर्तमान युवा पिढी र भविष्यका सन्ततिका बीच समेत एउटा झिनो सम्बन्ध स्थापित गर्ने आशामा पुस्तिका सम्पादन तथा प्रकाशन गर्न लागेको उषा बताउँछिन् । ज्यानको आहुति दिएर राष्ट्र बनाउने शहीदहरुको व्यक्तित्व र कीर्तित्व जोगाउने प्रयास कसैले नगरेकोमा दुःखी भएकी उषा भन्छिन्– शहीदका बारेमा लेख्न हाम्रो कलम भुत्तो छ, अन्वेषण गर्ने चेतना ब्यूँझेको छैन । प्रत्येक वर्ष शहीद सप्ताह भनेर काठमाण्डौमा मात्रै भए पनि शहीदहरुलाई श्रद्धाञ्जलि दिइन्छ । तर साँचो श्रद्धा दिइएको छैन, त्यसो भएको भए देश यस्तो अधोगतिमा पुग्ने थिएन ।

टाइफाइडले ग्रस्त चिनियाँलाल नबाँच्ने पक्का भएपछि उपचारका लागि बाहिर लैजाने अनुमति मिल्यो । तर त्यतिबेला अन्तिम अवस्था भइसकेकोले अस्पताल होइन, कालमोचन घाट लगियो । घाट लगेको ३/४ घण्टामै ३८ वर्षको अल्पायुमै उनले देहत्याग गरे । यसरी एउटा सपूतको अन्त्य भयो, शैक्षिक जागरणको बिगुल फुक्ने पहिलो व्यक्ति नेपाली जनताले गुमाए ।

पुस्तिकाको उपसंहारमा भनिएजस्तै **महावीर इन्ष्टिच्यूट** खोली शिक्षा प्रचार गरिएको बिउ गाउँ गाउँमा पुगेर चिनियाँलालको अस्तित्व जोगाउँदैछन् । तर अझै पनि असंख्य चिनियाँलालहरु चाहिएको छ, उनको भावना र बलिदान चाहिएको छ । सबैभन्दा बढी त उनको चिन्तनलाई मन्थन गरी एउटा क्रान्तिकारी परिवर्तन चाहिएको छ ।

*स्पेश टाइम दैनिक, २०५९/१०/१७*



# महावीर स्कूल रहेको घर भत्काइएकोमा आपत्ति

काठमाण्डौ (नेस) । सन् १९९३ मा शहीद चिनियाँलाल सिंहले **महावीर इन्स्टिच्यूट** स्कूल चलाएको आफ्नो घर कुनै जानकारी नदिई भत्काई दिएकोमा स्व.सिंहकी छोरी उषा सिंहले आपत्ति जनाउनुभएको छ ।

राणाकालमा बाङ्गेमुढास्थित महावीर स्कूल खोलेकै कारण शहीद चिनियाँलाललाई सर्वस्वसहित आजीवन कारावासको सजाय दिएका थिए । बिरामी अवस्थामा उपचार हुन नसकी जेलमै मृत्युवरण गर्नुभएका शहीद चिनियाँलालकी छोरी उषाले भन्नुभयो– नेपाल अधिराज्यकै पहिलो प्राइभेट स्कुलको इतिहास मेट्न दिनु भनेको शहीदको भावना माथि कुठाराघात हो । बि.सं.२००१ सालमा सर्वस्वहरण फिर्ता भएपछि जीर्ण अवस्थामा रहेको उक्त घर आफूले पुन: महावीर स्कूलकै रुपमा सञ्चालन गरेको हेर्न चाहेको तर, आफ्ना ठूलोबाका छोरा डा.रामबहादुर सिंह र राजबहादुर सिंहले आफूलाई कुनै जानकारी नदिई स्थानीय रंग पसले केशवप्रसाद श्रेष्ठलाई बेचेको उहाँले बताउनुभयो ।

जिल्ला प्रशासन कार्यालय, हनुमानढोका प्रहरी र काठमाण्डौ महानगरपालिकाले रोक्का पुर्जी दिंदादिंदै पनि उक्त घर भत्काउनुको बारे आरोपित व्यक्ति केशवप्रसाद श्रेष्ठसँग सम्पर्क हुन सकेन तर उहाँका छोरा किरण श्रेष्ठले यस सम्बन्धमा मुद्दा भइरहेको तर घर किन्दा अंश दावी गर्न मिल्ने कुनै कागजात नदेखिएको बताउनुभयो ।

यसैबीच नेपाल प्रजापरिषद्का सभापति रामहरि शर्माले नेपालमा प्रजातान्त्रिक जागरण ल्याउन शहीद चिनियाँलालले खोल्नुभएको महावीर स्कूलको भूमिका अतुलनीय रहेको हुँदा श्री ५ को सरकार तथा सम्बन्धित निकायले सहयोग गर्न अनुरोध गर्नुभएको छ ।

*(नेपाल समाचारपत्र, फागुन ११, २०५८)*



# शिक्षाको किरण छर्ने शहीद चिनियाँलाल सिंह

दुर्गामान खड्गी

काठमाण्डौ, महानगर । बि.सं. १९९३ साल जेठ २० गते नेपालमा सर्वप्रथम नेपाल प्रजापरिषद् नामक राजनीतिक संस्थाका उदय भएपछि शिक्षाप्रेमी चिनियाँलाल सिंहले आम नागरिकलाई शिक्षित गराई राजनीतिक चेतना नदिएसम्म राणा शासन हटाई मुलुकमा आमूल परिवर्तन ल्याउन सकिंदैन भन्ने कुरा बुझेर बि.सं.१९६३ साल शिवरात्रिको दिन खिंल्हस्थित आफ्नै घरमा **महावीर इन्ष्टिच्यूट** विद्यालय खोली एकतन्त्रीय राणा शासनविरुद्ध चुनौती दिइयो ।

बि.सं.१९६३ असार १७ गते काठमाण्डौमा जन्मेका चिनियाँलालले स्थापना गरेको उक्त विद्यालयमा नेपाल प्रजापरिषद्का सदस्यहरु शुक्रराज जोशी, धर्मभक्त माथेमा, गंगालाल श्रेष्ठ, टंकविलास बज्राचार्य, पूर्णबहादुर एम.ए. र सिद्धिचरण श्रेष्ठ जस्ता विद्वत तथा साहसी व्यक्ति व्यक्तित्वहरुले गुरुको रुपमा अध्यापन गराउनुभएको थियो । जसमध्ये पछि गएर धेरैलाई जहाँनिया क्रूर राणा शासन पल्टाउन गोप्य ढंगबाट षड्यन्त्र गरेको आरोप, कसैलाई मृत्युदण्ड त कसैलाई सर्वस्वहरण सहित आजीवन कैदको सजाय दिइयो ।

आखिर बि.सं.१९९७ साल माघमा शुक्रराज जोशी, धर्मभक्त, दशरथ चन्द र गंगालाल श्रेष्ठलाई प्राणदण्ड दिई छाडे भने बाँकी **महावीर इन्ष्टिच्यूट** विद्यालय संस्थापक चिनियाँलाल सिंह लगायत धेरैलाई सर्वस्व सहित आजन्म कैद गरिएको थियो । कैद अवस्थामै रहेका चिनियाँलाल बिरामी परी इन्तु न चिन्तु भएपछि उहाँको देहान्त भएको थियो । शिक्षाबिना बिकास हुँदैन भन्नु हुने चिनियाँलाल आम नेपालीलाई बारम्बार राजनीतिक चेतना दिनुपर्छ भन्नुहुन्थ्यो । शिक्षाको ज्योति फैलाउने क्रममा **महावीर इन्ष्टिच्यूट** स्थापनाको ठीक एक वर्षपछि अर्थात इ.सं.१९३६ सालमा बनेपाको चण्डेश्वरीमा चण्डेवरी **महावीर इन्ष्टिच्यूट** शाखाको रुपमा चण्डेश्वरी स्कूलको स्थापना गरियो । जुन स्कूललाई

तत्कालीन समयमा "चण्डेश्वरी विद्यालय" पनि भन्ने गर्दथे । गंगालाल श्रेष्ठद्वारा उद्घाटित उक्त स्कूलमा गंगागाल श्रेष्ठ, शुक्रराज शास्त्री, दशरथ चन्द, चिनियाँलाल सिंह, फत्तेबहादुर, इन्द्रमान बज्राचार्य, गणेशबहादुर र प्रेमबहादुर जस्ता विद्वत युवाहरु शिक्षक थिए ।

त्यस्ता त्यागी वीर अमर शहीदहरुप्रति आजसम्म पनि श्री ५ को सरकारले उहाँहरुको संस्मरणमा एउटा सिन्कोसम्म भाँचेको छैन । एकतन्त्रीय राणा शासन व्यवस्था अन्त्य गर्न ठूलो भूमिका निर्वाह गरेको ऐतिहासिक विद्यालयलाई देशमा प्रजातन्त्र आइसकेपछि पनि सो विद्यालय श्री ५ को सरकारले पुनः सञ्चालनतर्फ कुनै ध्यान नै नदिनु ठूलो बिडम्बना मान्नुपर्छ ।

*(महानगर, ०५९।३।१६)*



## महावीर इन्ष्टिच्यूट पुनः संचालन याइगु

यँ (सन्ध्या टाइम्स) । नेपाली इतिहासय् जक उल्लेख दुगु तत्कालिन **महावीर इन्ष्टिच्यूट**यात पुनः सञ्चालन याइगु जूगु दु । **महावीर इन्ष्टिच्यूट**या स्थापना दिवस हनेत आः नकतिनि जूगु छगू मूँज्याय् वक्तातय्सं ऐतिहासिक संस्था कथं उगू इन्ष्टिच्यूटयात हाकनं सञ्चालन याय्त बः ब्यूगु खः ।

न्हापांम्ह शिक्षा शहीद चिनियाँलाल सिंहलाई ९६ क्वःगु बुदिं हने कथं जूगू ज्याभ्वलय यँ महानगरपालिकाया मेयर केशव स्थापितं "चिनियाँ दाई" नाँया कविवर सिद्धिचरण श्रेष्ठं च्वयादीगु सफू नं बिमोचन यानादीगु खः ।

ज्याभ्वलय् जीवित शहीद कथं नांजाःम्ह नेपाल प्रजापरिषद्या अध्यक्ष रामहरि शर्मा शिक्षा बिना राजनीतिक ह्युपा सम्भव मजूगुलिं मिस्तय्सं नं थ्व ज्याय् बः बीमाःगु खँ धयादीगु खः ।

*(सन्ध्या टाइम्स, २०५९।३।१८)*

# "शैक्षिक क्रान्तिका अग्रदूत चिनियाँ दाइ" विमोचित

युगकवि सिद्धिचरण श्रेष्ठद्वारा लिखित तथा शहीद पुत्री उषा सिंहद्वारा सम्पादित शैक्षिक क्रान्तिका अग्रदूत चिनियाँ दाइ पुस्तिकाको हिजो काठमाण्डौ महानगरपालिकाका मेयर केशव स्थापितले बिमोचन गर्नुभयो ।

नेपालका प्रथम शिक्षा शहीद चिनियाँलाल सिंहको ९६ औ जन्मजयन्ती तथा १९९३ सालमा स्थापित **महावीर इन्ष्टिच्यूट** स्थापना दिवस समारोहमा उक्त पुस्तक बिमोचन गरिएको थियो ।

**महावीर इन्ष्टिच्यूट** गुठीद्वारा आयोजित समारोहमा बोल्दै मेयर स्थापितले **महावीर इन्ष्टिच्यूट** रहेको घर हाल स्कूल सञ्चालनका लागि अनुपयुक्त भएको हुँदा ट्रेनिङ्ग सेन्टर राखी अन्य ठाउँमा स्कूल खोल्ने सोच आफ्नो रहेको बताउनु भयो ।

नेपाल प्रजापरिषद् तथा **महावीर इन्ष्टिच्यूटका** अध्यक्ष रामहरि शर्माको सभापतित्वमा सञ्चालित उक्त सभामा शहीद चिनियाँलाल सिंहकी छोरी उषा सिंहले सीपमूलक शिक्षाका लागि जीवन अर्पण गर्नुहुने पिताको इच्छा कार्यान्वयन हुन नसक्नु दु:खको कुरा भएको बताउनुभयो ।

**महावीर इन्ष्टिच्यूट** पुनर्स्थापना गरिनुपर्ने कुरामा जोड दिइएको उक्त सभामा गुठीका उपाध्यक्ष प्रकाशधर शर्माले ऐतिहासिक शिक्षास्थललाई पैसामा होइन, पुरातात्विक सम्पदाको रुपमा मूल्याँकन गर्नुपर्ने बताउनुभयो । गुठीका सदस्य दुर्गाबहादुर श्रेष्ठ क्षेत्रीले **महावीर इन्ष्टिच्यूट** पुनर्स्थापित गर्न शहीद पत्नी स्व. तुल्सीदेवी र छोरी उषा सिंहले जीवन अर्पण गरिसक्दा पनि मूल्याकन नहुनु खेदपूर्ण कुरा भएको बताउनुभयो ।

*(नेपाल समाचारपत्र, ०५९।३।१९)*



# सबैको सहयोग चाहिने

*भूषण खड्गी*

काठमाण्डौ – नेपालका प्रथम शिक्षा शहीद चिनियाँलाल सिंहले बिना सरकारी इजाजत बि.सं.१९९३ सालमा खिंउलस्थित आफ्नो निवासमा **महावीर इन्स्टिच्यूट** खोलेबापत आजीवन काराबास तथा सर्वश्वहरण भएको थियो ।

गत सोमबार उनै प्रथम शिक्षा शहीद सिंहको ९६ औ जन्मजयन्ती तथा उहाँद्वारा बि.सं.१९९३ सालमा स्थापना गरेको प्राइभेट स्कूल **महावीर इन्स्टिच्यूट**को ६६ औं स्थापना दिवसको उपलक्ष्यमा जिउँदो शहीद रामहरि शर्माले ऐतिहासिक महत्व बोकेको **महावीर इन्स्टिच्यूट**लाई पुनर्स्थापना गर्नको लागि श्री ५ को सरकार नगरपालिका र जनता स्वयम्ले सहयोग गर्नुपर्ने धारणा राख्नुभयो ।

प्रमुख अतिथिको रुपमा काठमाण्डौ महानगरपालिकाका मेयर केशव स्थापितले युगकवि सिद्धिचरण श्रेष्ठद्वारा लिखित **"शैक्षिक क्रान्तिका अग्रदूत चिनियाँ दाइ"** नामक पुस्तक बिमोचन गर्दै हामीले पनि कार्य गर्न चाह्यौ भने गर्न नसकिने वा असम्भव भन्ने छैन । त्यसैले **महावीर इन्स्टिच्यूट**लाई पुनर्स्थापना गर्नु ठूलो कुरो होइन । तर उक्त विद्यालयलाई शहरी क्षेत्रमा भव्य रुपमा निर्माण गर्ने बताउनुभयो । शहीदकी सुपुत्री उषा सिंहको सक्रियतामा आयोजित सो कार्यक्रममा शहीद चिनियाँलाल सिंह र उनीद्वारा स्थापित **महावीर इन्स्टिच्यूट**का विषयमा प्रकाशधर शर्मा लगायत अन्य विभिन्न व्यक्तिहरुले पनि मन्तव्य दिनुभएको थियो ।

*(साप्ताहिक विश्वदीप, ०५९।३।२०।५)*



# महावीर इन्स्टिच्यूट भत्काउन रोक्का

बाङ्गेमुढास्थित शहीद चिनियाँलाल सिंहद्वारा **महावीर इन्स्टिच्यूट** सञ्चालन गरिएको विवादित घर अर्को कानूनी निर्णय नभएसम्म नबनाउनु नभत्काउनु भन्ने निर्णय हिजो जिल्ला प्रशासन कार्यालयबाट भएको छ ।

सन् १९९३ शिवरात्रिको दिन राणा ज्यादतीविरुद्ध चेतना जागृत गर्न नेपालकै इतिहासमा पहिलोपल्ट शहीद चिनियाँलालले आफ्नै घरमा महावीर प्राइभेट स्कूल खोल्नुभएको उहाँकी छोरी उषा सिहले बताउनु भएको छ ।

काठमाण्डौ महानगरपालिका वडा नं.२७ मा अवस्थित उक्त घर गल्कोपाखा निवासी आफ्नै ठुलोबाको छोरा रामबहादुर सिंह र राजनबहादुर सिंहले बिना सूचना स्थानीय रंगपसले केशवप्रसाद श्रेष्ठलाई बिक्री गरेको बताइन्छ ।

जिल्ला प्रहरी कार्यालय हनुमानढोका, काठमाण्डौ महानगरपालिका र सिडिओ कार्यालयले घर भत्काउन रोक लगाए तापनि गत मंगलबार बिहान ९ बजे उक्त घर जबर्जस्ती भत्काउँदा शहीद चिनियाँलालकी छोरी उषा सिंहले घरमा राखेको परम्परागत पुराना तथा घरायसी सामानहरु गायव पारिएको बताइएको छ । महावीर स्कूल नै बनाउन पाए आफूलाई आत्मसन्तुष्टि हुने बताउनु हुने उषा सिंहले यस पवित्र कार्यमा श्री ५ को सरकारलाई सहयोग गर्न आग्रह गर्नुभएको छ ।

यसैबीच, शहीद स्मारक समितिका अध्यक्ष प्रकाशधर शर्मा र नेपाल प्रजा परिषद्ले शहीद चिनियाँलालद्वारा स्थापित **महावीर इन्स्टिच्यूट** नेपाली इतिहासमै प्रथम प्राइभेट स्कूल मात्र नभई एकतन्त्रीय राणा शासन व्यवस्था अन्त्य गर्न ठूलो भूमिका निर्वाह गरेको हुँदा आवश्यक सहयोग गर्न श्री ५ को सरकारसँग अनुरोध गर्नुभएको छ ।

*(महानगर ०५८।११।१७।६)*



# महावीर इन्ष्टिच्यूट पुनः सञ्चालन

काठमाण्डौ, माघ १६ गते । शहीद चिनियाँलाल सिंहद्वारा बाङ्गेमुढा टोलमा स्थापित महावीर इन्ष्टिच्यूटलाई पुनः सञ्चालन गर्ने कार्यको शहीद दिवस समारोह समितिका अध्यक्ष रामहरि शर्माले आज शुभारम्भ गर्नुभयो ।

बि.सं.१९९३ मा शिवरात्रिको दिन तत्कालिन सरकारको अनुमति नलिइकन जनस्तरबाट खोलिएको उक्त इन्ष्टिच्यूट नेपाल अधिराज्यको पहिलो स्कूल थियो ।

कक्षा सातसम्म पढाई भएपनि उक्त स्कूलमा मूलत क्रान्तिकारी शिक्षा दिइने गरिन्थ्यो । गंगालाल पनि शहीद हुनुभन्दा ६/७ महीना अगाडि सो इन्ष्टिच्यूटका शिक्षक हुनुहुन्थ्यो ।

महावीर इन्ष्टिच्यूट खोली शिक्षाको प्रचार गरेबापत चिनियाँलाल सिंहलाई इन्ष्टिच्यूट स्थापना भएको ४ वर्षपछि तत्कालिन राणा शासकहरुले पक्राउ गरी आजीवन कारावासको सजाय दिएका थिए ।

श्री सिंहको जेलमा रहेकै अवस्थामा बि.सं.२००१ मा निधन भएको थियो । शहीद दिवसको अन्तिम दिन आज आयोजित सो समारोहमा श्री शर्माले महावीर इन्ष्टिच्यूट क्रान्तिको अग्रणी रहेको र त्यसबेलाका युवाहरुलाई क्रान्तिकारी प्रवाहमा ल्याउन सो इन्ष्टिच्यूटबाट महत्वपूर्ण प्रेरणा मिलेको बिचार व्यक्त गर्नुभयो ।

पुराना राजनीतिज्ञ खड्गमान सिंहले देशका निम्ति जीवन अर्पण गर्ने चिनियालाल जस्ता महान व्यक्तित्वहरुका लागि केही काम गर्न सके राम्रो हुने विचार व्यक्त गर्दै सो इन्ष्टिच्यूटको नाम चिनियाँ-महावीर भनी नामांकरण गरिनु पर्ने सुझाव दिनुभयो । शहीद दिवस समारोह समितिका सदस्य भुवनलाल प्रधानले ५० वर्ष पछाडि भएपनि महावीर इन्ष्टिच्यूटलाई बिउँताउन गरिएको प्रयास सराहनीय छ भन्नुभयो ।

शहीद चिनियालाल सिंहकी छोरी उषा सिंहले मुलुकमा दुई चोटी प्रजातन्त्र आइसक्दा पनि सो इन्ष्टिच्यूटको कदर नगरिएको गुनासो गर्नुभयो ।

सभापतिको आसनबाट महावीर इन्ष्टिच्यूट स्थापनाकालका शिक्षक टंक बिलासले सो इन्ष्टिच्यूट साधारण स्कूल मात्र नभई राजनीतिक विचारधारा भएका व्यक्तिहरु छलफल गर्न आउने थलो पनि थियो भन्नुभयो ।

समारोहको शुरुमा अमर शहीदहरुको आत्माको चीर शान्तिका लागि एक मिनेट मौन धारणा गरिएको थियो ।

**रासस, गोरखापत्र, माघ १७ गते २०४७ साल**

**सम्पादिका**



| | | |
|---|---|---|
| नाम | : | **उषा सिंह** |
| बाबु | : | शहीद चिनियाँलाल सिंह |
| आमा | : | श्रीमती तुल्सी देवी सिंह |
| जन्मस्थान | : | बाङ्गेमुढा, खिउल टोल |
| योग्यता | : | एम.एस्सी. फुड टेक्नोलोजी (यू.के.) |



**प्रकाशक**

महावीर इन्स्टिच्यूट केन्द्रको लागि

**मवि लोचन सिंह**

| | | |
|---|---|---|
| जन्मस्थान | : | बाङ्गेमुढा, खिउल टोल |
| योग्यता | : | डेन्टल सर्जन, एम.डी. (USA) |

मुद्रणः सिग्मा अफसेट प्रेस (प्रा.) लि., फोनः ४२३१३२८ फ्याक्सः ९७७-१-४२३१३२९